# काठमाडौंको नेवार समाजमा प्रचलित इहि संस्कारको एक अध्ययन

त्रिभुवन विश्वविद्यालय मानविकी तथा सामाजिक शास्त्र संकाय अन्तर्गत नेपाली इतिहास संस्कृति तथा पुरातात्विक विषयमा स्नातकोत्तर उपाधिका आंशिक परिपूर्तिका प्रयोजनको निमित्ति प्रस्तुत

**शोध-पत्र**

शोध निर्देशक
उप-प्राध्यापक
डा. मिलन रत्न शाक्य

प्रस्तुतकर्ता
मञ्जरी प्रधान
रोल नं. ३३९३

**नेपाली इतिहास संस्कृति तथा पुरातत्व**
**केन्द्रीय विभाग**
**किर्तिपुर, काठमाडौं**
**२०६४**

## शोधनिर्देशकको सिफारिस पत्र

त्रिभुवन विश्वविद्यालय मानविकी तथा सामाजिक शास्त्र संकाय अन्तर्गत नेपाली इतिहास, संस्कृति तथा पुरातत्व विषयको स्नातकोत्तर तह द्वितीय वर्षको दशौं पत्र शोध प्रबन्धको पाठ्यक्रम अनुसार परिपूर्तिको निमित्त यस केन्द्रीय शिक्षण विभागका विद्यार्थी मन्जरी प्रधान, रोल नं. ३३९३ ले **"काठमाडौंको नेवार समाजमा प्रचलित इहि संस्कारको एक अध्ययन"** विषयको अनुसन्धान प्रबन्ध तयार गर्नुभएको हो। यस शोधपत्रमा निजले बौद्धिक एवं अनुसन्धान प्रक्रियामा तत्परताकासाथ मेहनत र लगनपूर्वक तयार गरेकोमा मलाई सन्तोष लागेकोले आवश्यक मूल्याङ्कनको लागि यो सिफारिस गर्दछु।

..............................................................

शोध निर्देशक

(उप प्रा. डा. मिलन रत्न शाक्य)

नेपाली इतिहास, संस्कृति तथा पुरातत्व केन्द्रीय विभाग

त्रिभुवन विश्वविद्यालय, किर्तिपुर

काठमाडौं

मिति : २०६४/०९/

# विषय सूची



काठमाडौंको नेवार समाजमा प्रचलित

# इहि

संस्कारको एक अध्ययन

# कृतज्ञता ज्ञापन

सर्वप्रथम त म मेरा आदरणीय गुरू प्रा. डा. मिलन रत्न शाक्य ज्यूको अमूल्य सुझाव, सहयोगप्रति हृदयदेखि हार्दिक कृतज्ञता ज्ञापन गर्दछु र साथसाथै उहाँले दिनु भएको विषयगत एवं भाषागत शैलीको ज्ञानको लागि सदैव ऋणी रहने छु ।

मेरो शोधकार्यको लागि अमुल्य सुझाव तथा स्वीकृति दिनुहुने नेपाली इतिहास संस्कृति तथा पुरातत्व विभागका आदरणीय गुरू तथा विभाग प्रमुख प्रा.डा. दिनेश चन्द्र रेग्मी लगायत अरू श्रद्धेय प्रा.डा. प्रेम कुमार खत्री, प्रा.डा. पेशल दाहाल, प्रा.डा. विना पौड्याल, प्रेम ओली, प्रेम लामा, मदन रिमाल, पशुपती न्यौपाने प्रति समेत कृतज्ञता ज्ञापन गर्दछु ।

मेरो यस सोधकार्यमा सहयोग गरिदिनु हुने व्यक्तित्वहरू पं. बद्री रत्न बज्राचार्य, संस्कृतविद् बलदेव जुजु, संस्कृतविद् रमापती राज शर्मा, गुठी संचालक तथा संस्कृतविद् गिरिन्द्रराज शर्मा, चाँगुनारायणको पुजारी चक्राधरनन्द राजोपाध्याय, डा. नरेशमान बज्राचार्य, संस्कृतविद् हरिराम जोशी, संस्कृतविद् तथा हाम्रो कूल पुरोहित वासवचन्द्र राजोपाध्याय प्रति धन्यवाद व्यक्त गर्दछु ।

यसैगरी मेरो श्रीमान सुमन कुमार प्रधान, छोरी सुमन्जरी प्रधान, छोरा श्रीमद्ध प्रधान र सासु सानुमैया प्रधान लगायत मेरा पिता अम्बिका प्रसाद श्रेष्ठ, माता कृष्णा श्रेष्ठ र हजुरआमा चिनीमायाँ श्रेष्ठको सुभाषिक र धैर्यप्रति आभार व्यक्त गर्दछु ।

मेरा मित्रवर्ग तथा शुभचिन्तकहरू अरूणा नकर्मी, दिदी अनीता श्रेष्ठ, अनुप भट्टराई, कार्टुनिष्ट रविन सायमि, गायत्री नकर्मी, करूणा नकर्मी, सरीता, रेनु, सीता, सुधा, सृजना, शर्मिला, दिपेन्द्र डंगोल, संगी श्रेष्ठप्रति पनि आभार व्यक्त गर्दछु ।

मैले यस सोधकार्य सम्पन्न गर्न प्रयोग गरेको पुस्तकहरू त्रि.वि.वि. केन्द्रिय पुस्तकालय, आशा सफुकुथी, लोटस रिसर्च सेन्टरलाई धन्यवाद ज्ञापन गर्दछु ।

यस सोध कार्य सम्पन्न गर्न सहयोग गरिदिने प्राविधिकपक्ष रियल कम्प्युटरका जे.बी. पुरी, बिनोद गिरी, पुष्पा महरा, योमरी ग्राफिकका रत्नमान बज्राचार्य र मेरो सानोबुवा रोजकुमार श्रेष्ठ, सानीमा सानु श्रेष्ठ र सर राजा शाक्य प्रति विशेष धन्यवाद तथा प्रत्यक्ष, अप्रत्यक्ष सहयोग गरिएका पुस्तक, पत्रपत्रिका तथा लेख रचनाहरू र अन्य सहयोगी संघ संस्था, व्यक्तिहरूप्रति स-धन्यवाद ज्ञापन गर्दछु ।

- मन्जरी प्रधान

# काठमाडौंका नेवार समाजमा प्रचलित इहि संस्कारको एक अध्ययन

## पहिलो अध्याय

## परिचय

### १.१ शिर्षक

नेवारजाति काठमाण्डौ उपत्यकाका आदिवासी हुन् । हिन्दु र बौद्ध दुई धर्ममा विभाजित नेवार समाजमा "विवाह"लाई महत्वपूर्ण 'संस्कार' मानिन्छ । नेवार संस्कृतिमा यो परम्परालाई संस्कारको रूपमा लिइन्छ। यो संस्कार छोरीको जन्ममा गरिने महत्वपूर्ण संस्कार मध्ये इहि, बाह्रा र इहिपा गरी तीन भिन्दै स्वरूपहरू मध्ये बालिका अवस्थाको पहिलो कन्यादानको संकल्पबाट पूर्ति हुने संस्कार हो । नेपाली भाषामा वेल विवाह पनि भनिने यो संस्कार इहिको स्वरूप विवाह पनि हो भन्ने गरिन्छ ।

इहि नेवार समाजमा अबोध कन्याहरूको संस्कार हो। यो संस्कार छोरीको जन्ममा, अन्नप्राशन पछिको दोस्रो महत्वपूर्ण संस्कार हो। अन्नप्राशनको अवस्थासम्म बालिकाले केही थाहा पाउने भइसकेकी हुँदैनन् तर इहि गर्ने समय सम्ममा उनी आफैले केही हदसम्म बुझ्न सकिसकेकी र केही परिपक्व भैसकेकी हुन्छे। इहि तीन, पाँच, सात, नौ वा एघार वर्षमा विजोर वर्ष पारेर सम्पन्न गरिन्छ। इहि नेवार संस्कारमा केटीहरूको जीवनमा रजस्वला हुनु अगाडी गरीने महत्वपूर्ण प्रथा हो ।

इहि प्रथा एकल वा सामुहिक दुवै किसिमबाट सम्पन्न गर्न सकिन्छ। एकल अवस्थामा यो प्रथालाई सम्पन्नगर्दा बढी खर्च र धेरै विधि विधानद्वारा सम्पन्न गर्नुपर्ने हुनाले सामुहिक रूपमा गरिने इहिलाई धेरैले मान्यता दिने गरेको पाइन्छ। धेरै आर्थिक तथा सामाजिक भार पर्ने हुनाले आजकल सामूहिक रूपमा साँस्कृतिक संघसंस्थाहरूको माध्यमले यो परम्पराको निर्वाह भैरहेको देखिन्छ । यसको लागि आयोजक पक्षलाई तोकिएको शुल्क तिर्नुपर्ने हुन्छ। यो परम्परालाई प्रतिकात्मक विवाहको रूपमा पनि लिइन्छ। बुकी सुनको (प्रतिमा) प्रतिक राखि बेलसँग अवोधवालिकाको प्रतिकात्मक विवाह गराउने हुनाले यसलाई सुवर्ण कुमार विवाह पनि भनिन्छ। सुवर्णकुमार सित प्रतिकात्मक विवाह गरिसकेको मानिने हुनाले इहि गरीसकेका केटीहरू कहिल्यै पनि विधवा हुँदैनन् भन्ने विश्वास छ।

### १.२ समस्या कथन

नेवार समाजमा इहि अनिवार्य धार्मिक, सामाजिक संस्कार हो । हिन्दु तथा बौद्ध नेवारी परम्परामा दुवैले सामाजिक धार्मिक आस्था अनुरूप गरिन्छ। यस अध्ययनमा इहि संस्कार निम्न समस्याहरूको निस्कर्ष खोतल्ने प्रयत्न गरिएको छ।

१. *नेवार समाजमा सम्पन्न गरिने इहि संस्कारको कता सांस्कृतिक तथा व्यवहारिक पक्षहरू बारेमा ।*
२. *इहिको धार्मिक तथा सांस्कृतिक अन्तर सम्वन्धको बारेमा ।*

### १.३ अध्ययनका उद्देश्यहरु

(क) इहिको बारेमा व्याप्त विविध अवधारणाहरू प्रस्तुत गर्नु ।

(ख) यसको सांस्कृतिक र व्यवहारिक पक्षलाई प्रकास पार्नु ।

(ग) बौद्ध तथा हिन्दु परम्परागत इहिका विधिहरू प्रस्तुत गर्नु ।

### १.४ अध्ययनको महत्व

हिन्दु र बौद्ध नेवार समाजमा इहिलाई प्रतिकात्मक रूपमा गरिने महत्वपूर्ण विवाहको रूपमा लिने गरिन्छ । यसलाई सांस्कृतिक एवं व्यवहारिक महत्वको रूपमा सम्पन्न गर्ने गरेको छ । कन्यालाई इहि संस्कार सम्पन्न नगरीकन राखेमा अलक्षण अथवा अशुभ हुन्छ भन्ने धारणा पनि यसै समाजमा पाइन्छ । हालसम्म यस विषयमा खासै अध्ययन नभएको हुनाले यस विषयलाई अध्ययनका मूल शिर्षकको रूप दिइएको छ ।

### १.५ अध्ययनका क्षेत्र र सीमाङ्कन

(क) यो अध्ययनको सीमा काठमाडौंका हिन्दु र बौद्ध नेवारहरूको संस्कारभित्र सीमित रहेको छ ।

(ख) नेवार समाजमा गरिने दशकर्म अन्तर्गत पर्ने प्रमुख विवाह संस्कारमा 'इहि' मात्र यो अध्ययनको प्रमुख विषय हो ।

### १.६ अध्ययन विधि

काठमाडौंको नेवार समाजमा प्रचलित इहि (बेल विवाह) परम्पराको सांस्कृतिक र व्यवहारिक अध्ययन सोधकार्यका लागि फोटो अवलोकन, अन्तर्वार्ता विधिबाट प्राथमिक स्रोत संकलन गरिएको छ र पूर्व साहित्य समीक्षालाई द्वितीय स्रोतका रूपमा प्रयोग गरेर यस अनुसन्धानको कार्य सम्पन्न गरिएको छ । इहिसँग सम्बन्धित विषयवस्तु लेखिएको पुस्तक, आख्यानहरूलाई द्वितीय स्रोतको रूपमा अध्ययन गरिएको छ । जसमा विभिन्न संस्कृतिविद्हरूको मत र विभिन्न पत्रपत्रिकामा प्रकाशित लेखहरू पर्दछन् ।

**प्राथमिक स्रोतको रुपमा प्रयोग गरिने स्रोतहरु निम्न छन् ः**

**(क) प्रत्यक्ष अवलोकन**

१. इहिको बारेमा जानकारी प्राप्त गर्न प्रत्यक्ष रूपमा इहि भैराखेको स्थलमा गएर अवलोकन गरेर अध्ययन गरिएको छ । जसबाट शोधकार्यलाई बढी सहयोग प्राप्त भएको छ ।

२. नेवार समाजमा इहिको सांस्कृतिक र व्यवहारिक पक्षको जानकारी प्राप्त गर्न प्रत्यक्ष गएर अवलोकन गरेर अध्ययन गरिएको छ । यसबाट शोधकार्यमा बढी सहयोग प्राप्त भएको छ ।

**(ख) अन्तर्वार्ता**

अन्तर्वार्ता अनुसन्धान कार्यको लागि महत्वपूर्ण विधि मानिन्छ । तसर्थ यस शोधकार्यको लागि यस विधिको पनि सहयोग लिएको छ । यसको लागि सम्बन्धित विज्ञहरूका साथसाथै अभिभावक, इहि गरेको कन्या र पुरोहितहरूको अन्तर्वार्ता समावेश गरिएको छ । अन्तर्वार्ता औपचारिक तथा अनौपचारिक दुवै ढङ्गबाट लिएकी छुँ ।

औपचारिक रूपमा अन्तर्वार्ता समय लिएर लिइएको अन्तर्वार्ता र अनौपचारिक रूपमा इहि गरिसकेका कन्याहरू, इहि आयोजक, समारोहका, संस्था वा अभिभावकहरूसँग सोधिएको छ । अन्तर्वाताको क्रममा फोटो तथा रेकर्डरबाट पनि आवश्यक तथ्यांक संकलन गरेकी छुं ।

**(ग) छवि चित्र (फोटोग्राफी)**

प्राथमिक स्रोतको रूपमा छवि चित्रलाई प्रयोग गरिएको छ। जसले सोधकार्यको विषयवस्तुलाई बुझ्न सहयोग मिलेको छ र साथसाथै यसले अनुसन्धान कार्यलाई प्रमाणित पनि गर्नेछ । यस अनुसन्धानमा निम्न फोटोहरू समावेश भएका छन् ।

१. *हिन्दु संस्कारका इहिका फोटोहरू*

२. *बौद्ध संस्कारका इहिका फोटोहरू*

द्वितीय स्रोत समीक्षा निम्न अनुसार गरिएको छ ।

**१.७ पूर्व साहित्य समीक्षा**

**क. *"दि नेवारस"* गोपाल सिंह नेपाल, प्रकाशक : युनाइटेड एशिया पब्लिकेशनस, बम्बे, १९६४ ।**

*"दि नेवारस"* मा नेवार जातीले गर्ने विभिन्न संस्कारहरूको व्याख्या गरिएको छ यसै क्रममा नेवार केटीलाई गरिने इहि संस्कारलाई विवाह र सम्बन्ध विच्छेदसँग गाँसिएको देखिन्छ । सामाजिक रूपमा विवाहित श्रीमानको परिचय नआएसम्म नेवार केटीहरू धार्मिक रूपमा नारायण भगवाननै श्रीमानका रूपमा हुन्छन् । इहि गरिसकेको केटी मानिस विधवा नहुने र फेरी विवाह गर्न हुन्छ भन्ने कुरा उल्लेख गरिएको छ साथ साथै इहिको विधिको पनि वर्णन गरिएको छ ।

**ख. *"हिन्दु संस्काराज"* राजबली पाण्डे, प्रकाशक : मोतीलाल बनारसीदास प्रा.लि. दिल्ली ,१९६९ ।**

यस पुस्तकमा हिन्दु संस्कारहरूको बारेमा वर्णन गरिएको छ र साथसाथै वैदिककाल र अरू समयमा संस्कारहरू कसरी सम्पन्न गरिन्थ्यो भन्ने कुराहरूको पनि वर्णन गरिएको छ ।

**ग. *'नेवार सोसाइटी'*, गेरार्ड टोफीन, सोसल साइन्स बाहा,** ई. सं. २००७

यस पुस्तकमा नेवारका केही जातीहरूको सामाजिक संरचनाको विषयमा लेखिएको छ । यसै क्रममा राजोपाध्यायहरूको समाजमा इहि कसरी गरिन्छ र कति दिन सम्ममा सम्पन्न गर्ने गरिन्छ भनि वर्णन गरिएको छ ।

**घ. *भिजी"* स्वयम्भूलाल श्रेष्ठ, प्रकाशकः च्वसापासा, काठमाडौं ने.सं. १०८८**

'भिजी' मा इहिको विषयमा व्याख्या गरिएको छ । इहिलाई विवाह संस्कारको रूपमा व्यक्त गरिएको देखिन्छ । इहि किन गर्नुपर्छ भनि यसको व्यवहारिक पक्षलाई प्रष्ट्याउनु भएको छ । विधवा भएर बस्नु पर्दाको दुःखलाई हटाउन चलाइएको यो संस्कारको महत्वलाई स्वस्थानी

ब्रतकथाको कथासँग गाँसेर लेखिएको देखिन्छ भने स्कन्द पुराण अन्तर्गत हिमवत्खण्डको कथा अनुरूप वैधव्य जीवनबाट मुक्तिको लागि कुनै समाधान गर्नुपऱ्यो भन्ने पार्वतीको अनुरोधलाई नकार्न नसकि महादेवले सुवर्णकुमार रूपी श्री विष्णु भगवानसँग केटीहरूको विवाह गराइदिने विधिको रूपमा इहिलाई प्रस्तुत गरिएको छ। इहिलाई महादेवले सिकाएको विधिबाट हिरण्य पुरूषसँगको विवाहको रूपमा व्याख्या गरिएको छ। यसैगरि एउटा किंवदन्ती अनुसार पार्वतीको विवाह महादेवसँग भएपछि उनका साथीहरूको विवाह नभएको र पार्वतीलाई छोड्नु पऱ्यो भन्ने दुःख मानेको देखेपछी तुरून्त विवाह गरिदिन वर नपाएको हुनाले पहिले सूवर्ण कुमारसँग विवाहको विधि पूरा गरि राख्ने र पछि वर पाए पछि राम्ररी विवाह गर्ने कुरा वर्णन गरिएको छ। यस्तै गरी यसमा इहिलाई धार्मिक कथा अनुसार गर्नुपर्ने भनिएको भएता पनि यसलाई हाम्रो पूर्वजहरूको समाज सुधारको लागि चलाइएको सुधारात्मक पाइलाको रूपमा लिनुपर्ने कुरालाई यस पुस्तकमा व्याख्या गरिएको छ। यसैगरी जीवन जीउनको लागि चाहिने आधारभूत आवश्यकताहरूमा वैवाहिक जीवनबाट पाउने शारिरीक आवश्यकताबाट विधवाले बन्चित हुनुपर्ने हुँदा यसबाट समाजमा आउन सक्ने विकृतीहरूलाई निराकरण गर्न इहिलाई संस्कारको रूपमा अगाडी बढाइएको भन्ने कुरा बुझ्न सकिन्छ। इहि संस्कार सम्पन्न गरिसकेका केटीहरू कहिल्यै पनि विधवा नहुने विश्वासले फेरी पनि विवाह गरेर सधुवा जीवनयापन गर्न सकिन्छ भन्ने कुरा लेखिएको छ भने धार्मिकशास्त्र अनुसार दिइएको मान्यता जस्तो कन्यादान, माहादान, कन्यावस्थामा नै छोरीलाई कन्यादान गरेमा स्वर्ग प्राप्ती, अश्वमेघ यज्ञको फल जस्तो आदी भनाइको फल प्राप्तीको लागि इहि गरी कन्यादानको प्रकृया पुरा गर्न मद्दत मिलेको र वाल विवाहबाट हुने नराम्रो प्रभावबाट बच्न सकिने एवं कन्यादान नगरेमा लाग्ने पापहरूबाट मुक्त हुने कुराहरू पनि यस पुस्तकको अध्ययनबाट थाहा पाउन सकिन्छ।

**ङ. *"नेवा : संस्कार परिचय"* बज्रमुनी बज्राचार्य, प्रकाशन नेपामण्डल घाःचा धुकु, ने.सं. ११२०।**

यस पुस्तकमा नेवारहरूको दशकर्म संस्कार परिचय र क्रमविधिबारे उल्लेख गरिएको छ।

**च. *"नेवाः इहिपा विधि"* रीताराज भण्डारी, प्रकाशक नेपाल मण्डल घःचाःघुकू, नेपाल भाषा केन्द्रीय विभाग, यलध्वखा, यल, ने.सं. ११२२ कौला।**

नेवाः इहिपा विधिमा नेवार विवाहको वर्णन र इहिलाई विवाहको रूपमा वर्णन गरिएको छ।

**छ. *"दशकर्म संस्कार धर्म"* पं. बद्रीरत्न बज्राचार्य, प्रकाशकः माहिली बज्राचार्य कायगःननि, इतुंबहा ये. ने.सं. ११२५।**

त्यसै गरी वौद्ध नेवार संस्कृति विषयको पुस्तक 'दश कर्म संस्कार धर्म' मा इहिलाई कन्या सुम्पने कर्मको रूपमा व्यक्त गरिएको छ। बाल विवाहबाट समाजलाई पर्ने नकारात्मक प्रभावबाट बचाउन इहिलाई सुधारवादी सोचको रूपमा लिइएको छ। जीवनलाई राम्ररी अगाडी बढाउन बोधिचित्तलाई कन्या सुम्पने र यसरी कन्या सुम्पिसकेपछि ठूलो भइसकपछि छोरीले आफूलाई मनपर्ने जीवनसाथी, आफूलाई मनपर्ने समयमा रोज्न पाउने स्वतन्त्रता प्राप्त हुने विश्वास राखिन्छ। यसरी इहिलाई छोरीलाई स्वतन्त्रता प्रदान गर्ने संस्कारको रूपमा वर्णन गरिएको छ। यसमा बौद्ध धार्मिक परम्परा अनुसार इहि गरिने विधिको पनि वर्णन गरिएको छ।

**ज. *"सबै जातको फूलबारी"* डोरबहादुर विष्ट, प्रकाशकः साझा प्रकाशन काठमाडौं २०३० ।**

अर्को पुस्तक "सबै जातको फुलवारी" मा विभिन्न जातीहरूको वर्णन गर्ने क्रममा नेवार जातीको छोटो जानकारीमा इहिको संस्कार अन्तर्गत प्रयोग मात्र गरिएको दखिन्छ ।

**झ. *"धौवजी" निवन्ध मुना"* स्व. मोतिलक्ष्मि उपासिका, प्रकाशक नेपाल भाषा परिषद्, काठमाण्डौ २०५४ ।**

'निवन्ध मूना' मा इहिलाई जन्मदेखि मृत्युसम्म गरिने विभिन्न कर्मकाण्डहरूमा एउटा मानिएको छ । मचाबू व्यंकी (न्वारन), जंकव (अन्नप्रासन), बच्चालाई शुद्ध गर्न गरिए जस्तै इहि पनि छोरीलाई शुद्ध पार्न गरिने कर्मकाण्डको रूपम प्रस्तुत गरिएको छ । इहि नगर्दै रजस्वला भएमा जात नहुने र जात नभएकोसँग विवाह गर्न नमान्ने मान्यता अनुरूप हतार हतार ज्वाइ खोज्नु पर्ने दुःखबाट बच्नको लागि आमा बुबाले समयमा नै आफ्नो छोरीलाइ इहि गरिदिने गरेको कुरा व्याख्या गरिएको छ । यस्तै गरी इहिलाई समय अनुसार परिवर्तन गर्नुपर्ने कुरा पनि उल्लेख गरिएको देखिन्छ भने ब्राम्हण वर्गमा हुने चार प्रकारको विवाहमा उत्तम विवाह ब्रम्हा विवाह हो यस्तो नगरीकन अरूप्रकारको विवाह गरेमा ब्राम्हणको जात तल झर्ने कुरा जस्तो नेवारहरूमा यस्तो समस्या केही नहुने गरी बौद्धिक विवाहको रूपमा इहि गरिसकेपछि आफूलाइ अनुकुल अवस्थामा छोरीको विवाह गर्न सजिलो हुने कुरा पनि उल्लेख गरिएको छ । यसैमा इहिको प्रसंगमा सुधारवादी विचारधाराबाट समाजमा नारीको स्थान बारे पनि केही व्याख्या गरिएको छ ।

**ञ. *"नेवाः संस्कार व उकिया विधि"* बलदेव जुजु, प्रकाशक : वैदिक प्रतिष्ठान "न्हायकँतला" यैं. ने.सं. १११९ ।**

हिन्दु नेवार-संस्कृतिविद् बलदेव जुजुले "नेवाः संस्कार व उकिया विधि" मा इहिलाई विवाहको रूपमा लिएको देखिदैन । इहि गर्दा विवाह विधि अन्तर्गत गरिने विवाह नभई आफ्नो कूलमा भित्राउन गरिने विधिको रूपमा छोरालाई कुलमा भित्र्याउन बुसँखाः (व्रतबन्धन) गर्दा कपाल खौरदा कपालको केही भाग "आँगसा" बाँकी राखी कूलमा भित्राएको चिन्ह राखे जस्तै इहिमा गरिने सिन्दुरारोहणलाई यस्तै चिन्हको रूपमा लिएको देखिन्छ । सुवर्ण कुमार (श्री विष्णु) र बेललाई (शिव) का संरक्षकत्व ग्रहण गर्न गरिने पूजा विधि अन्तर्गत यस प्रथालाई राखिएको देखिन्छ । सुवर्ण कुमारलाई संरक्षकत्व ग्रहण गर्न कन्यादान (कन्या सुम्पने) गर्दा बेल (शिव) लाई साक्षी राखिएको कुरा व्यक्त गर्नुभएको छ । यसरी नै इहि छोरीलाई जिम्मेबार नागरिक बनाउन गरिने संस्कारको रूपमा पनि व्यक्त गरिएको कुरा प्रष्ट हुन आउँछ ।

**ट. *"नेवाः संस्कार संस्कृतिया ताःचा"* रत्नकाजी बज्राचार्य, प्रकाशकः बज्राचार्य प्रकाशन, ये. वि.सं. २०५६ ।**

विभिन्न नेवार जातीहरूको सम्बन्धमा नेवाः संस्कार संस्कृतिया ताःचा मा वर्णन गरिएको छ । जसमा नेवारहरूले छोरीलाई गरिने संस्कार इहिको बारेमा संक्षिप्त वर्णन प्रस्तुत गरिएको छ ।

**ठ. *"अभिनव संस्कृतिक कोष"* हरिराम जोशी, प्रकाशकः जोशी रिसर्च इन्ष्टिच्यूट, टेकु काठमाडौं २०५८ ।**

यसैगरी संस्कृति सम्बन्धि अनुसन्धानमूलक पत्र पित्रिकाहरू मध्ये "अभिनव संस्कृति" र "रोलम्बा" मा वैदिक कालमा हुने चतु विवाह अन्तर्गत इहि पनि एक प्रकारको विवाह मानिएको छ। वैदिक कालमा स्त्रीहरूको चार पटक विवाह हुने कुरा विभिन्न ऋचाहरूमा उल्लेख भए अनुसार सोमनाथ (महादेव) सँग इहिमा विवाह हुने कुरा त्यहाँ गरिएको छ। त्यस्तै गरि महादेव र सतीदेवीको विवाह हुँदा विष्णुलाई विवाह विधि पुरा गरीसकेपछि विष्णुले सतीदेवीको हात शिवको हातमा पारे जस्तै इहिको विधिमा पनि सुवर्ण कुमारलाई पूजा गरी बेल (महादेव) सँग विवाह हुने कुरा व्याख्या गरिएको छ।

**द. *"रोलम्बा मिलिनियम इस्यू"* हरिराम जोशी, प्रकाशक : जोशी रिसर्च इन्ष्टिच्यूट, टेकु, काठमाडौं २०५८ ।**

यसमा वैद्धिक कालमा हुने चतु विवाहलाई नेवार समाजमा हुने विभिन्न छोरी मानिसको संस्कारसँग जोडिएको देखिन्छ।

**ढ. *"नेवाः संस्कार तथा पूजा विधिहरू"* गणेश बज्राचार्य, प्रकाशक नेपाल भाषा मंका खल, भोजपूर, २०५८ ।**

'नेवा : संस्कार तथा पूजा विधिहरू' मा अरू विभिन्न संस्कारहरू गर्दा गरिने पूजा विधिहरूको वर्णनको क्रममा इहि गर्दा गर्नुपर्ने पूजाको विधि पनि उल्लेख गरिएको छ।

**ण. बज्रमूनी बज्राचार्य *"नेवा : संस्कार व उकिया शव्दाबली"*** मा नेवार संस्कारहरूको वर्णन गरिएको छ र इहि कहिले र कसरी गर्ने गरिन्छ भन्ने कुराको व्याख्या गरिएको छ। रीता राजभण्डारी नेवा : इहिपा विधिमा नेवा : विवाहको वर्णन र इहिलाई विवाहको रूपमा वर्णन गरिएको देखिन्छ।

**त. *"स्वक्वः गु इहि मुनेज्या स्मारिका"* प्रकाशक, धर्मचक्र तःननी खलः ने.सं. १११८ चिलागाःसतमी, शिलाष्टमी (२०५४ चैत्र ७ व ८ गते)**

यस स्मारिकामा विभिन्न विज्ञहरूको इहिको बारेमा आ-आफ्ना विचार प्रस्तुत गरिएको छ। डा.चुन्दा बज्राचार्यले 'इहि' मा नेवार समाजमा इहिलाई जन्मदेखि गरिने विभिन्न संकारहरूमा छोरीको लागि गरिने संस्कारको रूपमा लेखिएको छ। यसमा इहिलाई सामाजिक व्यवहार भित्र प्रवेशको लागि गरिने प्रथाको रूपमा पनि 'इहि'लाई लिएको देखिन्छ।

'इहि' दर्शनसँग सम्बन्ध राख्ने संस्कृति हो। यसले हुर्केकी छोरीलाई ठूलो भयौ भन्ने भाव जगाउँछ। ठूली भयौ भन्ने भावमा दुलहीलाई जस्तै लुगा लगाईदिनु पनि हो। भने इहिको विधिमा इहि पर्सि लगाउन दिनु पनि हो। यसरी ठूली भएको मानेर नै 'इहि' गरिसकेपछि यदि वालिकाको मृत्यु भयो भने परिवारको पाको उमेरका सदस्यहरूलाई गर्नु पर्ने दश क्रिया गरिन्छ। यदि 'इहि' नगरेको वालिका मऱ्यो भने केवल चार दिन मात्र बार्छ अरू केही गरिँदैन। यस्तै गरी यस लेखमा नेपालमा सवभन्दा पहिले राज्य गरिएको भनिएको गोपालवंशीहरूले गर्ने छोरीलाई गुन्यु चोली दिने संस्कारसँग तुलना गरेको देखिन्छ।

यसरी नै यस लेखमा हिन्दु र बौद्ध मार्गीले गर्ने इहिको विधिबारे पनि उल्लेख गरीएको छ। यस स्मारिकाको अर्को लेख इहि संस्कार विधिमा नेपालमा मानिसले जवदेखि देवता छ भनि देवतालाई मान्न थाल्यो त्यसै समयदेखि इहिको अस्तित्व रहेका छ भनि वज्रयान, पूजाविधि विधानले प्रमाणित गरेको कुरा उल्लेख गरिएको छ। इहिलाई मानिसले जीवनमा बिताउनु पर्ने मूख्य जीवन दाम्पत्य जीवनको लागि शुद्धफल वेललाई शुद्ध केटा मानि विवाह गराई भविष्यमा शुद्ध जीवन साथी पाओस् भन्ने सोच राख्ने कुरा लेखिएको छ। यस्तै गरी 'इहि' नेवारहरूको मौलिक संस्कार भएको कारणले यसलाई विर्सन हुँदैन बरू झन झन् राम्ररी गर्दै लानु पर्छ भन्ने कुरा पनि लेखिनको साथसाथै भएको छ। इहिको विधि पनि उल्लेख भएको छ। अर्को लेख "परम्परा व विधि सुधार"मा इहिलाई मानवहितको लागि गरिने विधिको रूपमा लेखिएको छ र जीवन जीउनको लगि लोग्ने-स्वास्नी एक भएर अगाडी बढ्नु पर्ने हुन्छ। यदि पत्नी मरिन भने पतिले तुरून्तै अर्को केटी खोजी विवाह गर्छ, यसलाई हाम्रो समाजले मान्यता पनि दिन्छ तर लोग्ने मऱ्यो भने विधवाले अर्को केटासँग विवाह गर्न अनमति दिदैँन । यस किसिमको भेदभाव हटाउन नेवार समाजमा स्वास्नी मानिसको स्वतन्त्रताको लागि गरिने विधी नै इहि हो भनिएको छ। यस्तो स्वतन्त्र भनेको जे पायो त्यही गरी सम्बन्ध राख्ने भनेको नभई केटा वा केटीले स्वतन्त्र रूपमा भेदभाव नगरी जीवन जीउने अधिकार मानिएको छ । अर्को लेख *"नेवाः तय मौलिक संस्कार इहि वालविवाह पनेगु छगू क्रान्तिकारी कुतः नं खः"* मा इहि भनेको वेलसँग गरिने विवाह संस्कार हो, जसलाई विवाहबाट बाँच्नको लागि चलाईएको नवीन संस्कृतिको रूपमा लेखिएको छ ।

यसरी नै 'इहि' गर्ने वालिकालाई कुमारी छँदा 'इहि' गर्नु पर्ने र कुमारी भनेको रजस्वला नभएकी दुईवर्ष देखि दशवर्ष सम्मको बालिकालाई लिइएको छ। यसलाई कुमारी पूजाको रूपमा पूजा गर्ने चलन छ । यस लेखमा 'इहि' गर्न वास्तवमा चार दिन लाग्ने कुरा लेखिएको छ ।

अर्को लेख *"इहियात ढुवाला स्वयेव"*मा हाम्रो देशमा भएको पुरूष प्रधानताको मान्यताले पुरूषले स्वास्नी मरको भोलीपल्टै विवाह गर्न हुने यति मात्र नभई बुढो मानिसको स्वास्नी मरेपनि तुरून्तै अर्को विवाह गर्न हुन्छ र यसलाई समाजले मान्यता पनि दिन्छ। तर एउटा नारीले उमेरमा नै लोग्ने मरोस उसको लोग्ने दुष्ट, जड्याहा जे भए पनि उसैको नाममा जिन्दगीभर विधवा भएर बस्नु पर्ने जस्तो दुःखपूर्ण मान्यता छ । धर्ती आमाको प्रतिक स्वरूप मानिने नारीले भोग्नुपर्ने दुःखलाई निवारण गर्ने जीवन्त इतिहासको रूपमा आएको प्रथा इहि हो भनि लेखिएको छ। अर्को लेख 'इहि' संस्कारमा अभिप्रायमा नेवारहरूले जन्मदेखि गर्ने संस्कारहरू आवश्यकता अनुरूप समय समयमा गर्नुपर्ने कार्यको रूपमा उल्लेख गरिएको छ । त्यस्तै गरी छोरी केही हुर्केपछि, बालापन केही हराउने, उमेर भएपछि सामाजिक नियम पालना गर्न सक्ने गरिने संस्कारको रूपमा इहिलाई उल्लेख गरिएको छ। यहाँ इहिलाई विवाहको रूपमा उल्लेख नभई समाजमा भित्राउन गरिएको विधि मानिएको छ ।

यस प्रकार यस स्मारिकामा इहि सम्बन्धि विभिन्न व्यक्तिहरूको लेखको साथसाथै धर्मचक्र तःननी खलः द्वारा २०५४ मा संचालित इहिमा भाग लिने २१३ जना वालिकाको नाम, इहि गर्दा

चाहिने पूजा सामग्री (ज्वालं), इहि प्रतिवेदन पनि प्रकाशित छ । यस तःननी खलः बाट संचालित इहिपा सामूहिक संस्कारमा हिन्दुतर्फ श्रेष्ठ, डंगोल, बौद्धतर्फ शाक्य, बज्राचार्य, महर्जन, सिं, मानन्धर थरको नेवारहरूले भाग लिएको देखिन्छ ।

**थ. *"गोष्ठी पत्र"* डा. नरेश मान बज्राचार्य, नेपाल मण्डल्या बौद्ध संस्कृति, लोटस रिसर्च सेन्टर, २०६१ ।**

त्यस्तै एक अनुसन्धानमूलक गोष्ठीपत्रमा बौद्ध समाजले मान्ने विभिन्न दशकर्महरूको व्याख्या गरिएको छ । दशकर्मलाई स्वभाविक कर्मको रूपमा व्याख्या गर्दै इहिलाई स्वभाविक रूपमा छोरी विकास हुने क्रममा आउने परिवर्तन अनुसार गर्नुपर्ने कर्म मानिएको छ । इहिमा दिइने इहिपर्सी (विशेष गुप्ताङ्ग छोप्ने कपडा) को रूपमा व्याख्या गरिएको छ भने यसलाई व्रतवन्धनकर्ममा छोरालाई दिइने 'केयता' (विशेष गुप्ताङ्ग छोप्ने कपडा) लाई एउटै उद्देश्यमा समान देखाउन खोजेको देखिन्छ ।

**द. *"काठमाण्डौका एघार टोलका मानन्धर र समुदायको सामाजिक सांस्कृतिक अवस्था एक अध्ययन"* मानन्धर, श्रीमती राजदेवी, समाजशास्त्र/मानवशास्त्र केन्द्रीय विभाग, त्रिभुवन विश्वविद्यालय २०५७ ।**

यस शोधपत्रमा मानन्धरहरूको सामाजिक सांस्कृतिक गतिविधिहरूको वर्णन गर्ने क्रममा मानन्धरहरूले गर्ने विभिन्न संस्कारहरूमा 'इहि'लाई छोरी कुमारी अवस्थामा गर्नुपर्ने संस्कारको रूपमा वर्णन गरिएको छ ।

**ध. *"नेवा : संस्कार व उकिया शब्दावली छगू अध्ययन"* बज्रमुनी बज्राचार्य, एम.ए., निग्‌गु दँ, मानविकी व सामाजिक अध्ययन संकाय, नेपाल भाषा केन्द्रीय विभाग, पाटन संयुक्त क्याम्पस, यल ध्वखा, यल ।**

यस शोधपत्रमा नेवारहरूले गर्ने संस्कार र ति संस्कारहरूले गर्दा प्रयोग हुने शब्दावलीको वर्णन गरिएको छ । यसै क्रममा यसमा इहिलाई नेवार समाज भित्र छोरी वच्चालाई पाँच वर्ष देखि दश वर्षभित्र वच्चा वेलामा नै आध्यात्मिक रूपले गरिने इहिपा (विवाह) को रूपमा वर्णन गरिएको छ ।

**न. *शाक्य"* ऋतुपौ (मुखपत्र), (प्रकाशक) : राष्ट्रिय शाक्य समाज नेपाल विश्वविद्यालय, ने.सं. ११२७ ।**

यस राष्ट्रिय शाक्य समाज नेपालवाट प्रकाशित 'शाक्य' ऋतुपौं (मुख पत्र)मा बौद्ध समाज अन्तर्गत पर्ने शाक्यहरूले 'इहि' लाई कसरी लिएको छ, इहि भनेको के हो, इहि गर्नु पर्छ कि पर्दैन, जस्तो आदी विषयहरूमा विभिन्न लेखकहरूको लेख लेखिएको छ । त्यस्तै गरी बौद्ध समाजमा इहिको औचित्य छ कि छैन भनेर पनि लेखिएको छ । यस ऋतुपौमा शाक्य जाति हिन्दु समाजमा सँगै बस्दै जाँदा हिन्दुहरूको प्रभावले गर्दा इहि गर्ने गरेको भन्ने कुरा पनि लेखिएको छ । विशेष गरी काठमाडौ उपत्यकामा बस्ने शाक्यहरूले इहि गर्ने र पछि काठमाडौ उपत्यका बाहिर बस्ने शाक्यहरूले इहि नेवारहरूको चलन हो भनि गर्ने गरेको भन्ने कुरा लेखिएको छ भने इहिलाई

नगरी नहुने संस्कारको रूपमा नलिएको देखिन्छ। यसमा इहिमा गरिने विधिमा सानो वालिकालाई 'लोग्ने' भनि सुनको प्रतिमालाई पूजा गराई बेलसँग विवाह गराईदिने गरेको राम्रो नभएको कुरा पनि लेखिएको छ। बौद्ध समाजमा छोराको लागि गरिने चुडाकर्म, वान्धाविषेक र प्रवज्या गरे जस्तै छोरीको लागि पनि यस्तै किसिमको दिक्षित गराइने सस्कार बनाउनु पर्ने कुरा उल्लेख गरिएको छ। यस प्रकार यस लेखमा इहिमा गरिने विधि परिवर्तन गरी समय सुहाउँदो शिक्षा दिने किसिमिको प्रकृया ल्याउनु पर्ने कुरा लेखिएको देखिन्छ। यस्तै अर्को लेख *'नेपाः गाः या शाक्य जाति हनावेच्वंगु 'इहि' परम्परा'*मा काठमाडौंमा वस्ने नेवारहरूले गर्ने गरेको विभिन्न संस्कारहरू मध्य 'इहि' छोरीलाई गरिने एउटा संस्कार हो भनिएको छ। जसमा वेल नामक फलसँग छोरीको विवाह गराइन्छ। त्यसैले यसलाई 'वेल विवाह' भन्ने गरिन्छ। कपिलवस्तुमा विदुदभले शाक्यहरूको संहार गर्न शुरू गरे पछि काठमाडौंमा पसेका शाक्यहरूले यहिको आदिवासीहरूसँग मिलेर वस्न मैत्री भाव स्वरूप उनीहरूले गर्ने संस्कार मान्न थालको हो भनि लेखिएको छ। यस्तै गरी यसमा एउटा कथा पनि लेखिएको छ कि बौद्ध समाजमा प्राचीन कालमा केटी मानिस सती पनि जान नपर्ने र वर्खी पनि बस्न नपर्ने थियो तर अरू जातीका मानिसहरूले बलजफती सती जानुपर्ने वा बर्खी बस्नुपर्ने नियम बनाइदिँदा बौद्ध समाजले छोरी रजस्वला नहुँदै इहि गरि सती पनि जान नपर्ने र बर्खी पनि बस्नु नपर्ने नियम बनाएको कुरा उल्लेख गरिएको छ। यसै गरी अर्को लेख *"इहि" धागु छु खः ?'* मा 'इहि' लाई शाक्य समाजले कसरी अपनायो र कसरी यसको विषयमा भएका जनधारणालाई मान्दै आएको छ भन्ने विषयमा लेखिएको छ। बौद्ध धर्म संस्कार अन्तर्गत विहारमा लगि छोरालाई 'बरेछ्वी' गर्दा वोधिसत्व वा बुद्धमूर्ति वा क्वापाद्यःसामु शीलसदाचारको बाटो हिँड्ने शपथ दिइन्छ, तर छोरीलाई यस किसिमको बौद्धधर्म अनुसारको कुनै शिक्षा दिइने संस्कार नभएको र हिन्दु समाजमा गरिने 'इहि' नै गर्ने गरेको हुँदा, छोरा र छोरीको वीचमा भेदभाव देखाएको जस्तो भएको हुँदा यसलाई *'दशशीलदीक्षा'* ग्रहण गने चलन चलाउनु पर्ने कुरा लेखिएको छ।

अर्को लेख *"इहिया विषयाय् दुवाला"* मा पनि 'इहि' गर्दा राखिने मान्यातालाई परिवर्तन गरी बौद्ध शिक्षाप्रति प्रतिवद्धता साहस जगाउने किसिमको चलन चलाउन उत्प्रेरणा एवं अभियानमा सवै शाक्यहरूको एक्यबद्धता हुनुपर्ने कुरा लेखिएको देखिन्छ।

यसरी नै अर्को 'इहि' सामाजिक सांस्कृतिक परम्परा लेखमा 'इहि'लाई धार्मिक भन्दा बढी सामाजिक मान्यता भएको छोरीलाई गरिने संस्कारमा अत्यावश्यक कर्मखंकेगू संस्कारको रूपमा मान्नु पर्ने कुरा लेखिएको छ र यसमा कुनै परिवर्तन गर्नु नपर्ने पनि भनिएको छ। यसरी नै यस लेखमा 'इहि' मा गरिने वेलसँगको विवाह (इहिपा)लाई पतिव्रता धर्म रक्षाको लागि प्रतीकारात्मक विवाहको रूपमा लेखिएको छ। अर्को लेख 'इहि' नेवाः जातिय संस्कार धर्ममा नेवारहरूले आफू जहाँ भएपनि दशकर्मलाई धर्म मानेर गर्ने गरको र छोरीलाई गरिने संस्कारहरूमा अरू संस्कार नगरे पनि 'इहि' चाही गर्नु पर्ने कर्म खंकेगु संस्कारको रूपमा गर्ने गरेको कुरा लेखिएको छ।

नेवार जातीमा मात्र रहेको 'इहि' परम्परा नेवार जातीको परिचय मान्न सकिने र यसको मूल्य मान्यतालाई नबुझिकन थोरै नेवारहरूबाट यसको विषयमा भनेका नमिल्दा कुराहरूलाई महसुस गर्नुपर्ने

कुरालाई बुझ्न आवश्यक देखिने कुरा लेखिएको छ। यस्तैगरी यस लेखमा त्यसबेला समाजमा चलेको वालविवाहलाई रोक्न आफ्नो मूल्य मान्यता अुनसार 'इहि'को चलन चलाईएको र 'इहि'लाई विवाहको रूपमा नलिएको देखिन्छ। 'इहि' गर्नु कन्या *संकल्प* गर्ने कार्य मात्र हो भनी उल्लेख गरिएको छ।

धार्मिक मान्यता अनुरूप छोरी रजस्वला हुनु अगाडी विवाह गरी पठाउनु पर्ने यसो नगरेमा आमा वुवा पापको भागीदार हुनुपर्ने र गऱ्यो भने धर्म लाग्ने कुराहरूले गर्दा समाजमा बालविवाहले व्यापकता पाएको हुनसक्छ। यस्तो हुँदा समाजमा विकृती फैलिएको हुँदा यस्तो विकृतीलाई रोक्न नेवारहले आफ्नो मूल्य मान्यता अनुसार 'इहि' गरी कन्यादान गर्न संकल्प गरी राखी वाल विवाह नगर्दा पाप लाग्ने मानसिकताबाट मुक्ति पाउने प्रयास मात्र हो। यसरी यस लेखमा 'इहि'लाई छोरी मानिसको जीवन सन्तुलित ढंगबाट चलाउन सकोस भनी बनाइएको संस्कारको रूपमा उल्लेख गरिएको देखिन्छ। 'इहि'को शुरूवात कहिलेदेखि भएको भन्ने विषयमा कसैले पन्ध्रौ शताब्दीतिर मुसलमानहरूको आक्रमण भएपछि चलेको भनिएको छ भने अर्को भनाइमा पहिले यहाँ राज्य गरेको गोपालवंशीहरूमा भएको छोरीलाई गुन्यू चोली दिने संस्कार नै पछि नेवारहरूमा 'इहि' गरि इहि पर्सी दिई ठूलो भएको मान्ने गरिएको कुरा उल्लेख भएको छ। यस्तै गरी अर्को नेवारहरूको मान्यता अनुसार छोरी मानिसको शरिमा आउने जैविक परिवर्तनलाई संरक्षण गर्न चलाएको संस्कारको रूपमा पनि 'इहि'लाई लिइएको कुरा उल्लेख भएको छ। नेवार समाजमा हिन्दु पुरोहित र बौद्ध समाजमा गुरूजुले गर्ने 'इहि' संस्कार विधि फरक फरक भए पनि 'इहि' नेवा समजको परिचय भैसकेको हुँदा यसलाई हटाउने होइन की गौरव गरी जोगाउने कुरामा जोड दिनु पर्ने लेखिएको छ।

अर्को लेख *"नेवाः तयगु इहि संस्कारः छगु विचार"* मा नेवार समाजमा छोरीको संस्कारको रूपमा रहेको इहि परम्परा शाक्य समाजमा कत्तिको आवश्यक छ वा छैन भन्ने कुरामा चर्चा गरिएको छ। साथसाथै 'इहि' को सुरूवात कहीले कसरी भएको हो भन्ने कुराको अनुमान गरिएको देखिन्छ। 'इहि'को उत्पत्ति कसरी भयो भन्ने सन्दर्भमा भारतमा त्यस समयमा बाल विवाहको प्रचलन रहेको सो को प्रभाव नेपाली समाजमा पर्न जाँदा वालविवहको चलन भएको र नेवार समाजले वालविवाहबाट आउन सक्ने नराम्रो प्रभावबाट बच्न इहिको चलन शुरू गरिएको र त्यस्तै गरी नेपालमा भएको मूसलमानि आक्रमणबाट आफ्नो छोरीलाई बचाउन 'इहि' गरि वेलफल र सुनको प्रतिमारूपी विष्णु भगवानसँग विवाह गराइदिएको कुरा उल्लेख भएको छ। यस्तै ठूलो भैसकेपछि विवाह गर्दा यदि विवाह गरेको लोग्ने मऱ्यो भने जीवनभर विधवा भै वस्नु पर्ने हुँदा सानो वेलामा नै 'इहि' गरी देवतासँग विवाह गराई राखे पछि विधवा हुनु नपर्ने भनि यस संस्कारको शुरू भएको पनि मानेको देखिन्छ। यसरी नै अर्को मान्यता अनुसार तत्कालीन समयमा सती प्रथा चलेको हुँदा विधवा नै नहुने गरी इहिको शुरूवात गरी सतीप्राथाबाट नेवारहरूले आफ्नो छोरी चेलीलाई बचाउन गरिएको प्रयासको रूपमा पनि लेखिएको देखिन्छ भने बौद्ध मार्गीहरूले हिन्दुहरूको प्रभावबाट इहि संस्कार गर्ने गरको र अहिलेको परिस्थितीमा 'इहि' नगरे पनि हुन्छ भन्ने कुरा पनि लेखिएको छ र 'इहि'लाई परिवर्तन गरी वौद्ध धर्म दर्शन अनुरूपको ऋषिनी प्रब्रज्या अथवा अनागारिका प्रब्रज्या गर्ने नयाँ संस्कारको शुरू गर्नुपर्ने कुरा उल्लेख गरिएको छ।

अर्को लेख 'इहि' परम्पराया खँ मा 'इहि' लाई नेवार समाजमा बौद्ध र हिन्दु दुवैले छोरीलाई कुमारी अवस्थामा गरिने संस्कारको रूपमा वर्णन गरिएको छ । इहिको चलन कसरी समाजमा चल्यो भन्ने कुराको सामाजिक मान्यताहरूको पनि वर्णन गरिएको छ ।

वौद्ध समाजमा इहि गर्दा गरिने विधिको साथसाथै इहिको लागि आवश्यक सामग्रीहरूको पनि उल्लेख गरिएको छ। यस लेखमा इहि राम्ररी गर्नको लागि चार दिन लाग्ने र कुन कुन दिनमा के के गरिन्छ सोको पनि वर्णन गरिएको छ ।

**प. *"नेवार म्यारिज किनसीप"* अनिल मान शाक्य, थेशिस सवमिटेड फर पि.एच.डि.,बर्निल युनिभर्सिटी, ई.सं. २००० ।**

त्यसैगरी एक अप्रकाशित, विद्यावारीधिका निमित्त प्रस्तुत शोधग्रन्थ (नेवार म्यारिज एण्ड किनशिप इन नेपाल) मा इहि संस्कार सम्पन्न गरीने वालिकाको उमेर र कुन कुन जातमा गरिन्छ सोको तालिका प्रस्तुत गरिएको छ । यसमा इहिलाई लौकिक विवाहको रूपमा व्यक्त गरिएको देखिन्छ ।

# दोस्रो अध्याय
# नेवार समाजमा इहि प्रथा

## २.१ नेवार समाज

उपत्यकाका प्राचीन जनघनत्वमा नेवारहरूको बाहुल्यता थियो र यिनीहरू यहाँ विशेष रूपमा बसोवास गरेको पाइन्थ्यो । नेवार जाती एउटा राष्ट्रकै रूपमा नेपालमा वसोवास गर्दै आएको जाती भएपनि आजभोली नेवारहरू काठमाण्डौ उपत्यकामा आदीवासीको रूपमा बसोवास गर्दै आएको मान्यता छ । हिजोआज विभिन्न कारणहरूले गर्दा देशको धेरै स्थानमा यहाँबाट देशान्तरीत (विस्थापित) भएर गएको देखिन्छ । यसरी देशान्तरित भएर नेवारहरू नेपालको पूर्व पश्चिम दक्षिणका शहरी क्षेत्रहरू दोलखा, तानसेन, पोखरा, वन्दिपुर, नुवाकोट, त्रिशुली, भैरहवा, धादिङ्ग जिल्ला र अन्य ठाउँहरूमा बसोवास गर्दै आएको पाउँछौ । यस बाहेक नेवारहरू तिव्वत (ल्हासा, साङ्घाई), सिक्किम, दार्जिलिङ्ग, कालिङपोङ, देहरादून र उत्तरी भारतका अरू क्षेत्रहरूमा पनि वसोवास गरेको पाउँछौ । [१]

नेवार समाज बहु जातीहरूको मिश्रीत समाज हो । यसको सदस्यहरू भोटवर्मेली भाषा 'नेवा भाय' बोल्ने गर्दछन् ।[२] नेवार समाजमा मुख्य हिन्दु र बौद्ध धर्म मान्नेहरू पाउन सक्छौं । जुन :

१. बुद्धमार्गी - जसले भगवान बुद्धलाई पुज्दछन् ।
२. शैवमार्गी - जसले भगवान शिवलाई पुज्दछन् ।[३]

बुद्धमार्गीहरू गृहस्थ जीवन बिताउने र गृहस्थ जीवनमा प्रवेश नगर्ने दुई पक्ष हिनयानी (थेरावादी) र माहायानी (बज्रयानी) हुन्छन् । माहायानीहरू भिक्षु भएर पनि गृहस्थ जीवनमा रहन्छन् । यिनीहरूको कर्मसंस्कार बज्राचार्य (गुरूजु) बाट गराउँछन् भने हिन्दुमार्गीहरू राजोपाध्याय (द्यः बर्मू) बाट गराउँछन् । यसरी समाजमा हिन्दु र बौद्ध गरी दुई धर्मलाई मान्नेहरू भएता पनि यिनीहरू दुबैको धार्मिक कृयाकलापमा बर्षौ देखि एक अर्कोसँग अर्न्तसम्बन्ध भइरहेको देखिन्छ । [४]

काठमाडौंको सभ्यतामा नेवार जातीको साँस्कृतिक परम्पराको ठूलो भूमिका रहेको छ । मध्यकालीन मल्ल राजाहरूको कला संस्कृती प्रतिको अभिरूचीको कारण नेवार संस्कृति अझ बढी मौलाएको देखिन्छ । अहिलेसम्म हामीले मनाउने गरेका चाडपर्व, रीतीथीती त्यस समयको देन मान्न सक्दछौं । यि चाडपर्व रितीथीती मध्यकालदेखि मात्र शुरू भएको नभई त्यस समयदेखि परम्परागत रूपमा चल्दै आएको थिती बढी फष्टाएको हुन सक्ने अनुमान गर्न सकिन्छ ।

---

[१] गेराई टोफिन, *'नेवार सोसाइटी'*, (पाटन : हिमाल बुक्स, ई.सं २००७) पृ. १ ।

[२] उही, पृ. ७ ।

[३] के.पी. चटोपाध्याय : *'हिष्ट्री अफ नेवार कल्चर'*, (काठमाण्डौ : इडुकेशनल इन्टरप्राइजेज प्रा.लि., १९८०), पृ. ४ ।

[४] उहि, पृ. ७ ।

मध्यकालका राजाहरूमा जयस्थिति मल्ललाई रीतिथिति बाँध्ने राजाको रूपमा चिनिन्छ। उनै राजाले बाँधेको थिति अनुसार हाम्रो समाज चलेको थियो । जयस्थिती मल्लले ने.सं. ५१५ मा थिती बाँधी रिती धर्म कर्म तथा पेशा अनुसार कर्म, कार्य गर्नु पर्ने नियम बनाई दिएका थिए । यस पछि नेवार जाती र बाहिरबाट आएकाहरूलाई नेवार जातीमा बाध्न र यसको रितीथीतीमा लगाउन उनै राजाले ने.सं. ५१५ माघ शुक्ल १० रोज बिहान ११ घडीमा चढेपछी कलश स्थापना गरी उद्घाटन गराएका थिए र कोटी होम पनि गर्न लगाएका थिए ।[५]

नेवारहरू को हुन् र यसको प्राचीनता नेपाल भूमिमा कहिलेबाट जोडिएको हो भनि यकिनका साथ भन्न नसकेता पनि विभिन्न इतिहासकारहरूले यसको विषयमा आ-आफ्नै ढंगबाट व्याख्या गरेका पाउँछौं । नेवारी भाषामा 'प' र 'ल' लाई क्रमैसँग 'व' र 'र' उच्चारण हुने हुँदा नेपालबाट नेवार हुन गएको हो ।[६] यस्तै इतिहासविद बावु कृष्ण आचार्यले 'नेपार' बाट 'नेवार' भएका हो भनि भनेका छन् । शक सम्बत ८११ म कर्नाटवंशी नान्य देवले नेपाल उपत्यकामा आनन्द मल्लले राज्य गरि राखेको समयमा आक्रमण गर्दा मल्लावार जिल्लाका नायरहरू पनि सँगै आएका थिए र यिनीहरू नै पछि नेवार भई यहिकै स्थानीय जातीसँग बसोबास गरेको हो भन्ने गरिन्छ ।[७]

यसरी नै अर्का विद्वान मेजर दब्लुब्रक नर्थेको अंग्रेजी पुस्तक 'दि ल्याण्ड अफ गुर्खाज'मा नायर नै नेवार हो भनि लेखिएको छ। नान्यदेवले दक्षिण भारतबाट ल्याएका नायर भन्ने मल्लावारका जातीहरू सिपाइको रूपमा आएकालाई छुट्टै वस्ती बसाए। आज भोली नेपाल खाल्डोमा बस्ने बहुसंख्यक नेवारहरू यिनीहरूकै वंशज हो भनिएको देखिन्छ। नेवार र नायरको सम्बन्ध देखाउन खोज्नु टाढाको कुरा जस्तो देखिएता पनि प्राचीन नेपालको इतिहासमा यस्तो कुरा वारम्बार उल्लेख भई रहेको हुँदा नेपाल र दक्षिण भारतको सम्बन्धलाई नकार्न सकिदैन ।[८]

नेवार संस्कृतिका विधीहरूमा प्रयोग हुने धेरै जस्तो चिज विजहरू नेपालमा नपाइने केवल भारतीय भूमिमा मात्र उब्जने वस्तुहरू छन्। शुभकार्यहरूमा प्रयोग हुने वस्तुहरू नेपालमा नपाइने भारतमा मात्र पाइने भए पनि त्यस्तो वस्तुहरू हाम्रो विशेष कामकाजको लागि नभई नहुने भएको हुनाले नेपाल र भारतबीचको सांस्कृतिक, व्यवहारिक सम्बन्धलाई नकार्न सकिँदैन।

श्री बाल चन्द्र शर्माज्यूको *'नेपालको इतिहास'* मा पनि कर्नाट वंशको प्रथम राजा नान्यदेवको भक्तपुर, पाटन र काठमाडौंका शासकलाई हराएर नेपालमा कर्नाट वंशले राज्य स्थापना गरेको कुरा उल्लेख गरिएको छ ।[९]

---

[५] लीला भक्त मूनकर्मि, *'भक्तपुर मासिक'* २०५० अंक ९ ।
[६] गोपाल सिं नेपाली, *'द नेवाराज्'* (बम्बेः यूनाइटेड एशिया पब्लिकेशन्स्, १९६४), पृ. २७ ।
[७] उहि, पृ. ८६ ।
[८] स्वयमभू लाल श्रेष्ठ, *'झिजि'* (काठमाडौंः च्वसापासा, ने.सं. १०८८) पृ.८६ ।
[९] उही, पृ. ८८ ।

कर्नाट वंशी नान्यदेव पछि विभिन्न राजाहरूले यहाँ राज्य गरेको देखिन्छ । यि राजाहरू कला संस्कृतिप्रेमी भएका प्रमाण स्वरूप आजसम्म पनि हाम्रो सामु रहेका मठ,मन्दिर, पाटी, पौवा, दरबार, देव मूर्ती आदि अझै पनि विद्यमान छन् । ती प्रायजसो नेवार कला परम्पराबाट निर्माण भएको मान्न सकिन्छ । यसरी नै यहाँ चलेको चाडपर्व, जात्रा, उत्सव प्राय जस्तो नेवार संस्कतीका छन् । काठमाडौं उपत्यकामा रहेको नेवारको वाहुल्यताको कारणले गर्दा नेवार संस्कृति फस्टाएको मान्न सकिन्छ । नेवारहरू चाडपर्व बढी मान्ने भएको हुनाले एउटा लोक उक्ती यस्तो पनि छ । *'क्षेत्री बिग्रियो मोजले नेवार विग्रियो भोजले'* यसको अर्थ क्षेत्रीहरू बढी मेजमस्तीमा रमाउँछन, नेवारहरू बढी भोज खाएर रमाउँछन् ।

नेवारहरू जीवनको हरेक पल सुख समृद्धी एवं सुचारू रूपले अगाडी बढाउन सकोस भन्ने अभिप्राय राखी विभिन्न संस्कारहरू मान्ने गर्दछन् । यस्तो संस्कारहरूमा प्राग जन्म संस्कार (जन्मनु भन्दा पहिले गरिने संस्कार), जीवन संस्कार (जन्म पछि गरिने संस्कार), मृत्यु संस्कार (मरेपछी गरिने संस्कार) हरू हुन् ।

हिन्दु नेवार समाजमा राजोपाध्यायले पुरोहित्याई गर्ने गरेको देखिन्छ । यिनीहरूको समाजमा वाल विवाहको चलन रहेको देखिन्थ्यो । केटीहरू नावालक अथवा कुमारी अवस्थामा छँदा नै विवाह गरिदिनु पर्ने यदि कुमारी अवस्था वितिसक्दा पनि विवाह नगरी राखेको केटीलाई समाजले अस्वीकार गर्दथ्यो । यसै कारणले राजोपाध्याय समाजमा 'इहि' गर्ने चलन थिएन । तर पछिपछि वाल विवाहको कारणले आएको नकारात्मक पक्षहरूले गर्दा नेपालमा इ. १९५१ मा वाल विवाहलाई कानुनले वन्देज गरेपछि आजभोली राजोपाध्याय समाजमा पनि 'इहि'को चलन शुरूभएको देखिन्छ । सांकेतिक रूपमा भगवान नारायणसँग कन्याको रजस्वला हुनुभन्दा पहिले विवाह गराई राख्ने गरेको देखिन्छ । इहि गर्दा अझ नेवारहरूको जस्तो समुहमा नगरी एकल रूपमा केही घण्टामा सकिने गरी सरल ढंगबाट गर्ने गरिन्छ ।

राजोपाध्यायहरूको इहिमा 'कन्यादान' गराइदैन । 'कन्यादान' विधि मानिससँग विवाह गर्ने संस्कारमा मात्र गर्ने गरिन्छ ।

यिनीहरूको वैवाहिक सम्बन्धमा विधवाले फेरी विवाह गर्नुलाई निषेध गरिएको छ । यदि कुनै अवस्थामा यस्तो विवाह भयो भने त्यस्तो जोडीलाई जातबाटै निकाल्ने र यस्तो विवाहबाट अगाडी बढेको जातलाई 'लाखे ब्रम्हु' भन्ने गरिन्छ । उनिहरूलाई मूल पुरोहितको दर्जा नदिई अतिथी ब्राम्हणको स्थानमा राखिन्छ ।[१०]

---

[१०] उही पृ. ६८ ।

**२.२ नेवाः संस्कार**

मानिसले आफूलाई बिस्तारै विस्तारै जंगली अवस्थाबाट मुक्त पार्दै सभ्य हुन सिकेको कुरा विभिन्न मानवशास्त्रीहरूले व्यक्त गरेका छन् । जंगली अवस्थाबाट सभ्य हुन सिक्नु भनेको नै जीवनप्रति सजक हुनु हो । जीवनप्रति सजक हुन सिकाउने ज्ञान नै मानिसको संस्कृति हो । ज्ञान आउनु नै चेतना जाग्नु हो । जब मानिसले चेतनशील भएर कुनै पनि कार्य गर्छ भने त्यो नै 'संस्कृति' हो । मानिसको विभिन्न संस्कृतिले मानिसलाई एकलबाट परिवार, परिवारबाट समाजमा बस्न सिकायो । यहि समाजमा बस्न गर्नुपर्ने कार्य नै संस्कार हो ।

वैदिककालदेखि नै संस्कार गर्ने गरेको विभिन्न वेदमा उल्लेख भएको पाइन्छ । मानिसले जीवन शुरू गर्ने अवस्थादेखि मृत्युपर्यन्तसम्म पनि विभिन्न संस्कार गर्ने गरेको पाइन्छ ।[११] पछिका समयमा मानिसहरू विभिन्न जात जातीमा विभाजित हुँदै गएपछि आफ्नो जात धर्म अनुसार ती संस्कारलाई सार्दै लगेको देखिन आउँछ ।

नेवारहरूले गर्ने संस्कारको आधार पनि त्यहि हो तर आफ्नो देश, परिस्थिति, जात धर्म अनुसार त्यसलाई समायोजन गर्दै लगेको पाउन सक्छौं ।

कुनै पनि मानिसको आ-आफ्नो समाज हुन्छ र त्यसै समाजमा बसी सामाजिक नीति नियमको पालना गर्ने गर्दछ । यस किसिमको नीति नियम कहीले कसरी कुन ढंगबाट पालना गर्ने भन्ने कुरा उसको संस्कारले सिकाउँछ । मानिस भएर मानवीय गुण नभएमा उसलाई मानव भन्न नसकिए जस्तो मानिस समाजमा बसेर सामाजिक नियम पालना गर्दैन भने उसलाई सामाजिक प्राणी पनि भन्न सकिदैन । अर्को शब्दमा भन्नुपर्दा सामाजिक नियम भनेको नै संस्कारहरू हुन् ।

संस्कारले मानिसलाई सभ्य हुन सिकाउँछ । के गर्न हुन्छ, के गर्न हुँदैन के गरेमा के हुन्छ भन्ने कुराको ज्ञान दिन्छ । त्यसैले यसले जीवन एवं मूल्य मान्यता दिन्छ भनेर भन्न सक्छौं । प्रत्येक मानिसको उसको धर्म र जात अनुसारको संस्कार हुने गर्दछ । मानिसले जीवनमा आउन सक्ने नराम्रो प्रभावबाट बच्न र राम्रो पक्षलाई लिन संस्कार गर्ने गर्दछ । कुनै पनि संस्कार कर्मबाट मानिसको जात, धर्म, देश परिवेश छुट्याउन सकिन्छ त्यसैले संस्कारलाई मानिसको पहिचान पनि भन्न सकिन्छ । जसरी काठ पहिल्यै त्यति महत्व हुँदैन, जब फर्निचर बन्छ त्यसको महत्व अझ बढी हुन पुग्छ । त्यसरी नै मानिसको मूल्य मान्यता त्यसबेला अधिक हुन्छ, जुनवेला उसले आफ्नो संस्कार पालना गर्छ ।

हामी समाज धर्ममा अधिक विश्वास राख्ने गर्दछौं र हरेक कर्मलाई धर्म मानी पालना गर्ने हुनाले संस्कारलाई पनि "संस्कार धर्म" मानी पालना गर्ने गरेका हुन्छौं । आफ्नो काम कर्तव्यलाई समय अनुरूप संस्कारको रूपमा पालना गर्ने गरेको पनि पाउँछौं ।

---

[११] राजवली पाण्डे, *'दि हिन्दू संस्काराज्'* (दिल्लीः मोतीलाल बनारसिदास पब्लिसर्स प्रा.लि., ई.सं. १९६९) पृ. १५ ।

| हिन्दू संस्कार [12] | हिन्दू नेवा संस्कार [13] | बौद्ध नेवा, संस्कार [14] |
|---|---|---|
| १. गर्भाधान | १ धौवधि नकः वनेगु | १. गर्भाधानकर्म |
| २. पुसवन | २. मचाबु ब्यंकेगु | २. पुर्सवनकर्म |
| ३. सीमान्तोनयन | ३. नां तयेगु | ३. सीमन्तोपनयनकर्म |
| ४. जातकर्म | ४. मचाबू ल हिक : वनेगु | ४. जातकर्म |
| ५. नाम कर्म | ५. मचा जा नकेगु | ५. नामकर्म |
| ६. निष्क्रमण | ६. न्हायपं प्वा : खनेजु | ६. अन्नप्रशनकर्म |
| ७. अन्नप्राशन | ७. आख : स्यनेगु | ७. चूडाकर्म |
| ८. कर्णभेदन | ८. चुडाकर्म (चुडाकरण, बुसंखा, इहि) | ८. ब्रतदेशनकर्म |
| ९. विद्यारम्भ | ९. उपनयन (कयतापुजा, बरेछुये, बाह्रा तये) | ९. ब्रतमोक्षणकर्म |
| १०. चुडाकरण | १०. इहिपा (विवाह) | १०. पाणिग्रहण कर्म |
| ११. चूडाकर्म | | |
| १२. ब्रतवन्धन | | |
| १३. उपनयन | | |
| १४. पाणिग्रहण | | |
| १५. भीमरथारोहण | | |

यी संस्कारलाई नेवाः समाजमा दुई भागमा विभाजन गरी गर्ने गरको पाइन्छ। जुन दश कर्म र दश क्रिया अन्तर्गत पर्दछन्। यि संस्कारहरूमा इहि (बेल विवाह) र बाह्रा तये (गुफा राख्ने) चाही छोरीको लागि मात्र गरिने संस्कार हो।

यि संस्कारहरू सवैले सवै मान्ने गरको पाइदैन। आ-आफ्नो जाती र वर्ग विशेषमा चलन अनुसार मान्नु पर्ने र कुनै मान्नु नपर्ने देखिन्छ। कसै कसैले कुनै कारणवश कुनै संस्कार गर्दा नराम्रो घटना घटेको भए त्यस्तो संस्कारलाई नगर्ने गरको पाइन्छ। त्यसरी नै अन्नप्राशनको दिनमा वालकको मृत्यु भएको भए अन्नप्राशन नै गर्दैनन् वा एकदम सरल ढंगबाट मात्र गर्ने गरेको पाइन्छ।

**२.३ नेवारहरुको इहि प्रथा :**

इहि गरिने प्रचलन नेवार जातीहरूमा मात्र पाइन्छ। हिन्दु र वौद्ध दुवैले आफ्नो धार्मिक आस्था अनुरूप इहिको विधिलाई संम्पन्न गरी सामाजिक नियम पालना गरेको देखिन्छ। इहिमा भएको धार्मिक भावना र यसको उदेश्यलाई बुझ्नु भन्दा पहिले परम्परा देखि चलि आएको इहि

[12] उहि, पृ. १५-३०।

[13] बज्रमुनि बज्राचार्य, *नेवा संस्कार व उकिया शब्दावली छगू अध्ययन,* (अप्रकाशित शोध ग्रन्थ) मानविकि व सामाजिक अध्ययन संकाय, नेपाल भाषा केन्द्रीय विभाग, पाटन संयुक्त क्याम्पस, ने.सं. ११२०।

[14] डा. नरेशमान बज्राचार्य : *गोष्ठी पत्र,* नेपाल मण्डल्या बोद्ध संस्कृति, लोटस रिसर्च, २०६१।

प्रथा “कर्म खंकेगू” गर्नु पर्छ भन्ने धारणामा सम्पन्न गर्ने गर्दछन् । कर्म खंकेगू भनेको दश कर्म भित्र पर्ने संस्कार हो ।

इहि प्रथाको शुरूवात कसरी कुन अवस्थामा भयो भन्ने कुराको लिखित प्रमाणको अभाव भएको हुनाले एकिन गरी यस विषयमा भन्न सकिएको देखिँदैन तैपनि यसलाई धार्मिक कथा (स्वस्थानी ब्रतकथा, हिमवत खण्डको कथा) सँग जोडेर हेर्ने गरेको हुनाले यसको प्राचीनतालाई सोही धार्मिक कथाको समयसम्म लग्न सकिने अनुमान गरिन्छ ।

इहिपा : नेवार भाषामा ‘इ’ भनेको समय हो । ‘पा’ भनेको जोडी हो । ‘इहिपा’ भनेको विवाह हो । इहिलाई नेपाली भाषामा ‘वेल विवाह’ भन्ने गरिन्छ भने नेवारहरू इहिलाई शाब्दिक अर्थ अनुसार नभई यसमा गरीने पूजा विधि अनुसार कसैले विवाह, कसैले आफ्नो छोरीलाई, कुल देवतालाई संरक्षकत्वको लागि सुम्पने कार्य नै मान्ने गरको पाइन्छ भने कसैले ‘इ’ भनको समय भएको हुनाले समयमा गरीने कन्या संकल्पलाई इहि मानेको देखिन्छ । ईही संस्कार गरिसकेपछि कन्या कुलदेवताको घर (आगः) मा जान योग्य हुन्छन र केटीको विवाह पछि अथवा आफ्नो घरबाट पहिलो पटक लोग्नेको घर जान अघी कुलदेवटाको घरमा विदा लिन जाने गर्दछ ततपश्चात कन्यालाई आगः प्रवेश निषेध गरिन्छ । यो चलन हिन्दु नेवारहरूमा मात्र छ । यस्तै गरी इहिमा गरिने सिन्दुरारोहणलाई संस्कृतविद वलदेव जुजुले आफ्नो कुल देवताको घरमा भित्राउन दिएको चिह्न मानेको देखिन्छ ।

हिन्दुहरू स्वस्थानी व्रतकथा अनुसार सती देवीको विवाहको समयमा भगवान विष्णुसँग विवाहको विधि सम्पन्न भएपछि महादेवको हातमा विष्णुले सती देवीको हात पारिदिए जस्तै इहिमा सुवर्ण कुमार रूपी सुनको प्रतिमासँग विवाहको विधि सम्पन्न पश्चात वेलफल रूपी महादेवसँग विवाह हुने कुरामा विश्वास राख्छन् । वौद्धहरू श्रवण कुमारसँग वा वोधचित्तलाई समयमा कन्या सुम्पने विधि मान्दछन् । समयमा कन्या सुम्पी राखेपछि, कन्या ठूलो भए पछि आफूलाई मनपर्ने समयमा आफूलाई मनपर्ने जीवनसाथी रोजी विवाह गर्न सकिन्छ भन्ने गरिन्छ ।

नेवार समाजमा जुनसुकै अवस्थामा भए पनि इहि गर्ने गरको पाइन्छ । देश विदेश जहाँ भए पनि आफ्नो सुविधा र अनुकुलमा इहि गर्ने गरेको देखिन्छ । इहिको विधि ठूलो र धेरै सर समग्रीहरूको आवश्यकता भएको हुनाले एकल रूपमा भन्दा पनि सामुहिक रूपमा इहि गर्ने गरेको पाइन्छ । इहि गर्नलाई पाँच देखि नौ वर्षको उमेरलाई उपयुक्त मानिन्छ । हिन्दुहरूको इहि द्यः ब्रम्हु (राजोपाध्याय) ब्राह्मणबाट सम्पन्न हुन्छ भने वौद्धहरूको इहि गुभाजु (वज्राचार्य) बाट सम्पन्न गरिन्छ । अहिलेसम्म पनि इहिलाई नगरी नहुने संस्कारको रूपमा र निश्चित उमेर भित्र गर्नुपर्ने संस्करको रूपमा गर्ने गरेको पाइन्छ । आज भोली इहि गरिसकेपछि ठूलो भोजको आयोजना गर्ने चलन पनि बढेको देखिन्छ । इहि गर्दा कुनै व्यक्ति, कुनै सस्था वा गुठीद्वारा आयोजना गरेको ठाउँमा लगिन्छ भने कुनै कुनै अवस्थामा मन्दिर शिलान्यास गर्दा कन्या पूजाको रूपमा इहि गर्ने गर्दछ भने बुढो जन्को (भीमरथारोहण) गर्दा पनि इहिको लागि उपयुक्त समय मान्ने गरेको पाइन्छ । कसै कसैले साधारण तरीकाबाट समय अभाव हुँदा

विजेश्वरी मन्दिरमा लगेर पनि इहि गर्ने गरेको पाइन्छ। यस मन्दिरमा इहि गर्दा शाक्य (पुरोहित) द्वारा इहि सम्पन्न गर्ने गराउँछन्।

इहि गर्दा 'कर्म खंकेगु' को भनाईमा गर्ने गरको पाइन्छ। धेरै जस्तो मानिसहरूले इहि गरे पछि छोरी ठूलो हुने कुरामा विश्वास गर्ने गरेको पाइन्छ। इहि संस्कार पछि छोरीवेटीलाई परिवारको वयस्क सदस्यको रूपमा लिइन्छ। परिवारको तेऱ्हदिने दाजुभाईहरू अथवा फुकीहरूको जुठो, (जेविली/खेविली) सुतक, वाऱ्हा आदीमा परिवारको जेठो सदस्यले वार्ने जस्तै उनले वार्नु पर्ने हुन्छ। इहि गर्दा गरिने विधिहरूले घरेलु कामहरू सिक्छ भन्ने पनि विश्वास राखिन्छ। इहिमा देवतालाई कन्यादान गरिदिने हुनाले कहील्यै विधवा नहुने मान्याता पनि राखेको पाउँछौ। इहि गर्ने उमेर पुग्न लागेपछि परिवारको सदस्यहरूले आफ्नो छोरीलाई धेरै कुराहरूबाट सम्भ्फाउने र बुभ्फाउने गरेको पाउँछौं। जस्तै अब तिम्रो इहि गर्ने, इहि गरेपछि तिमी ठूलो हुन्छौं, तिम्रो जुठो यता उति गर्नु हुँदैन, तिम्रो विवाह वेलसँग हुन्छ आदी इत्यादी। यस किसिमका कुराहरू प्रत्येक नेवार परिवारमा हुने गरेको पाइन्छ ,यसबाट इहि गरीसकेपछि कन्यामा एक प्रकारको मानसिक परिवर्तन आएको देख्न सक्दछौं। इहि गर्दा दुलहीको जस्तो पहिरन लगाइदिने र इहिमा 'इहिपटासी' भनी विशेष प्रकारको लुगा लगाउन दिँदा सवैले तिमी ठूली भयौ अव साडी लगाउने आदी भन्ने गर्दा कन्यामा स्वतह एक प्रकारको वयस्कको भावना आएको देख्न सकिन्छ। इहि गर्दा गरिने प्रत्येक विधिले कन्यामा एक प्रकारको कौतुहलता रमाइलोपन दिने गरको पाइन्छ। यसरी इहिको विविध पक्षको महत्वलाई बुभ्फेर वा नवुभ्फेर भए पनि इहि नेवार समाजमा गर्ने गरेको पाइन्छ। जहाँ भए पनि जुनसुकै अवस्थामा भए पनि यसालाई अनिवार्य प्रथाको रूपमा गर्ने गरेको देखिन्छ।

## २.४ नेवार संस्कारमा इहि प्रथा

इहि नेवार समाजमा कुमारी अवस्थाको छोरीलाई गरिने संस्कार हो। पाँच देखि नौ वर्षको उमेर भित्र यो संस्कार गर्ने गरको पाइन्छ। इहि गर्न यसरी उमेरको हदवन्दी राख्नुको मूख्य कारण रजस्वला हुन भन्दा पहिल्यै इहि गर्नुपर्छ भन्ने मान्यता राख्नु हो। कथं कदाचीत ईही संस्कार गर्नु अगाडी रजस्वला भयो भने अपसगुन मानिन्छ। पाँच देखि नौ वर्षको समयको हदवन्दी राख्नु परिवारको अनुकुल समयमा संस्कार सम्पन्न गर्नु हो। साथै कन्यालाई तिमी यौनावस्थामा पदार्पण गर्देछौ भन्ने मानसिक संकेत दिनुको साथै भोलीका दिनहरूमा सामाजिक मानमर्यादाको पालना गर्ने सक्षम हुदैछौ भन्ने संकेत पनि हो।

नेवार समाजमा गरिने संस्कारहरूमा छोरा र छोरीको लागि केही संस्कारहरू छुट्टा छुट्टै छन्। छोरालाई 'बुसंखाय' गरिन्छ भने छोरीलाई 'इहि' गरिन्छ। इहि भनेको के हो र किन गर्नुपर्छ भन्ने विषयमा विभिन्न संस्कृत विद्हरूको आ-आफ्नो धारण देखिन्छ। संस्कारको हिसावले सवै इही गरिने कन्या नावालक नै हो। हिन्दु र वौद्ध दुवै समाजमा 'इहि' आ-आफ्नो धार्मिक मान्यता अनुसार गर्ने गरिन्छ। इहि गर्नुको उदेश्य दुवै समाजमा एउटै भए पनि यसको केही प्रकृयाहरू मात्र फरक ढंगबाट गरिन्छ। यसको विषयमा हिन्दु र वौद्ध समाजका संस्कृतविद्हरूको आ-आफ्नो मान्यता र विधि छन्।

**बौद्ध तथा हिन्दु परम्परामा सम्पन्न गरिने दशकर्म संस्कारहरू:**

संस्कार विभिन्न तत्वहरूको संग्रहहरूको संग्रह हो । यसमा आफ्नो पूर्वजहरूको विश्वास, भावना र ज्ञान जोडिएको हुन्छ । संस्कार गर्नाले मानिसलाई आफ्नो लक्ष्यसम्म पुग्न दैवी शक्तिको सहायता प्राप्त हुन्छ भन्ने विश्वास राखिन्छ । यसरी नै संस्कारलाई धर्मको रूपमा लिई यसले शुद्ध, पवित्र र सुरक्षा प्राप्त हुन्छ भनी अदृश्य शक्तिमा विश्वास गरिन्छ । यसको महत्व प्रार्थना गर्ने व्यक्तिको चाहानामा आधारित हुन्छ भने ती चाहना र स्तुती पारिवारीक सुख समृद्धिको लागि हुन्छ । हिन्दु, बौद्ध समाजमा गरिने संस्कारहरू यस प्रकार छन् ।

**बौद्ध समाजमा प्रचलित जन्मपूर्व थालिने संस्कारहरू**

क) गर्भाधान संस्कार
ख) पुसंवन संस्कार
ग) सीमन्तोनयन संस्कार
घ) जातकर्म

**जन्म संस्कारहरू**

ङ) नामाकर्म (नामाकरण)
च) निष्क्रमण
छ) अन्नप्राशन
ज) बाह्रा (चुडाकर्म)
झ) कर्णभेदन
ञ) समाव्रत
ट) विवाह (पाणिग्रहण)[१५]

**जन्म अगाडि गरिने संस्कारहरू**

जन्म अगाडि गरिने संस्कारका मुख्य उद्देश्य तिन छन् । यी उद्देश्यहरूलाई स्मृतिकारहरूले गर्भिणी र तीनको जिम्मेवारीको रूपमा लिइएको छ । जुन यसप्रकार छन् :

- अदृश्य शक्तिहरू जस्तै भूत, प्रेत, बोक्सी आदिबाट गर्भिणीलाई हुन सक्ने कष्टबाट बचाउने ।
- मानसिक रूपमा स्वस्थ राख्नु ।

**क) गर्भाधान संस्कार**

हिन्दु र बौद्ध दुबै समाजमा गर्भाधान संस्कारलाई स्वाभाविक कर्मकोरूपमा लिइन्छ । विवाहित जीवनको प्रमुख उद्देश्य सन्तानको उत्पादन गर्नु हुनाले यो कर्मलाई गर्भाधान संस्कारका रूपमा लिएको पाइन्छ । बाह्रा राख्नु भनेको पहिलोपल्ट रजस्वला भएकी अथवा नभएकी केटीलाई बाह्र दिनसम्म गुफामा राख्नु हो । केटीहरूमा रजस्वला शुरू हुनु भनेको नै गर्भाधानको लागि योग्य भएको मानी यसपछि केटी मानिसलाई वयस्क भएको मानिन्छ । हिन्दुहरूले वंशलाई अगाडि बढाउन गरिने कर्मकोरूपमा गर्भाधान संस्कारलाई लिएको पाइन्छ ।

---

[१५] उही *'गोष्ठी पत्र'* ।

गर्भाधान संस्कार भनेको इहिपा संस्कारको कारक हो । परम्परागत रूपमा आफ्नो जात, धर्म, संस्कार र राष्ट्रको नियममा जनसंख्याको वृद्धिमा यस संस्कारको अत्यधिक महत्व हुन्छ । वास्तवमा विवाहको कारण गर्भाधान हुनाले 'गर्भ' रहन नसक्ने "बन्ध्या" स्त्रीका बदलामा अर्को नारीको विवाह गर्ने उपाय पनि संस्कारले अनुमति प्रदान गरिएबाट त्यसको महत्व बुझ्न सकिन्छ ।

**ख) पुसंवन संस्कार**

पुसंवन संस्कार गर्भाधारण गरेको तेस्रो अथवा चौथो महिना पुगेपछि छोराको चाहानामा गरिने संस्कार हो । यो संस्कार पुरूष प्रधान समाजको बाहुल्यता बढेपछि विकसित भएको संस्कार मानिन्छ ।

बैदिक र धर्मशुत्रहरूमा उल्लेख भएअनुसार छोरा जन्मनु भनेको पिताको ऋण तिरिदिनको लागि भएको मानिन्छ । ऋग्वेदमा पुत्रलाई ऋणच्युत भनिएको छ,[१६] यसर्थ पुत्रको बढी चाहना भएको समयमा विकसित भएको संस्कार पुसंवन हो ।

**ग) सीमन्तोनयन कर्म**

गर्भाधारण गरेको पाँचौ महिनादेखि गर्भको भ्रूणको मस्तिष्कको विकास शुरू हुन्छ । त्यसैले यस महिनादेखि गर्भिणीलाई विशेष हेरविचार गरी सुविधामा राख्ने गरिन्छ भने यसै समयदेखि बच्चा जन्मने समयसम्ममा गरिने संस्कार सीमन्तोनयन कर्म हो । कसैले गर्भधारण गरेको आठ महिनामा भएपछि गरिने संस्कारको रूपमा पनि लिइन्छ । गृह्यसूत्रमा चौठो वा पाँचौं महिनामा यो संस्कार गर्नुपर्छ भनिएको छ । स्मृति, ज्योतिषशास्त्रहरूमा आठ महिना देखि बालक जन्म हुने समयसम्ममा यो संस्कार गर्नुपर्छ भनी भनिएको छ भने कतै कतै यदि यो संस्कार नगर्दै बच्चा जन्मेमा आमाको काखमा राखेर पनि यो संस्कार गर्न सकिन्छ भनिएको छ ।[१७] नेवार समाजमा यसलाई बालक जन्मने समय भएको मानी गर्भिणी अवस्थामा हुने विशेष खाने, हेर्ने, घुम्ने, सुघ्ने इच्छा पूरा गर्न माइतितर्फबाट "धौवजी नकेगु" भनी विभिन्न खानेकुराहरू विशेष दही, चिउरा, योमरि (नेवारहरूको विशेष रोटीको परिकार), मासुको परिकार, तरकारीको परिकार, अचार, मिठाई, फलफूल, भुटेको अन्न आदि खुवाउन ल्याउने गरिन्छ । यसैलाई सीमन्तोयन संस्कार भनिन्छ ।

**जन्मसंस्कार**

**घ) जातकर्म**

बच्चा जन्मिसकेपछि यो संस्कार गरिन्छ । नेवार समाजमा जातकर्म गर्दा आफ्नो नजिकको नातेदार 'फुकी' लगायत अझ आफन्तहरूलाई खबर पठाइन्छ । खबर पठाउँदा छोरा जन्मेको भए सिङ्गो चाकू, सिङ्गो सुपाडी र छोरी जन्मेको भए आधा चाकू, आधा सुपाडी र अरू सामानहरू जस्तै घ्यू, ज्वानो, अदुवा, जाईफल, सिन्दुर आदि राखेर *'सिचुपालु'* पठाइन्छ । यो सबभन्दा पहिले बच्चाको मामाघरमा पठाइन्छ । मामाघरबाट त्यस *'सिचुपालु'*मा राखिएको सामानको दुईगुणा थपेर फिर्ता पठाइन्छ । यसरी खबर पठाउनुको अर्थ बच्चाको न्वारनमा 'कु' (सगुन) पठाउँछु भनी स्वीकृति गरिएको हो । *'पिध्यने'* भनेर नवजात बच्चाको नाल काटिन्छ र राती *'छ्वास'*

---

[१६] उही, पृ. ४९ ।

[१७] उही, पृ. ६५ ।

(आ-आफ्नो इलाकामा एक निर्दिष्ट स्थान हुन्छ) मा फ्याँक्न पठाइन्छ । यस दिनदेखि *'जयविलि कने'* भनेर सुतक बार्ने गरिन्छ । यसपछि चौथो वा छैठौं दिन विशेष गरेर जोर दिन पारेर *'मचाबू व्यन्के'* गरेर सुतक चोख्याइन्छ ।[१८] यस दिनमा शिशु, आमा दुवैलाई नुहाई धुवाई गर्न लगाई सफा, लुगा लगाउन दिई अरू विभिन्न कार्य "अजि"बाट गरिन्छ ।

### ङ) नाम कर्म

नामकर्म संस्कार बालकलाई समाजमा चिनाउन नाम दिइने कर्म नै नामाकरण संस्कार हो । गृह्यसूत्रमा बालक जन्मेको बाऱ्हौं दिनमा यो संस्कार गर्नु पर्छ भनिएको छ[१९] भने कसै कसैले बालकको जन्म दिनको दिनमा गर्नुपर्छ भनिएको छ। बालकलाई नाम दिँदा विभिन्न कुराहरू जस्तै जात, धर्म, समय आदिलाई ध्यान दिइने गरेको पाइन्छ ।

समान्यतया मानिसको नाम जन्मपत्रीकामा एउटा र बोलीचालीमा प्रयोग हुने नाम अर्को हुन्छ । ज्योतिषीले जन्मपत्रीका बनाउँदा बालक जन्मेको घडी, पला नक्षत्रलाई आधार बनाएर लग्न राशी ठहराई नाम निकालिदिन्छ । सामान्यतया यो नाम गोप्य राखिन्छ । परिवार समाजको लागि अर्को नाम राखिन्छ । परिवारको ज्येष्ठ सदस्यबाट नाम दिइने गरिन्छ । नाम दिँदा विभिन्न तत्वहरूले प्रभाव पारेको हुन्छ जस्तै :

- नक्षत्र अनुसारको नाम
- महिनामा पर्ने विशेष देवदेवीको नाम अनुसार
- पारिवारीक इष्ट देवताको नाम अनुसार
- प्रख्यात व्यक्तित्वहरूको नाम अनुसार
- विरोध जनाउने नाम
- आफ्नो धर्म, जात अनुसारको नाम
- परिवारमा चलिआएको पारम्परिक नाम अनुसार

### च) निष्क्रमण

निष्क्रमण संस्कार बालक जन्मेपछि पहिलो पल्ट घरबाट वाहिर लग्नको लागि गरिने संस्कार हो । अदृश्य शक्तिबाट हुन सक्ने सम्भावित क्षयबाट बालकलाई बचाउन यस प्रकारको संस्कार गर्ने गरिन्छ । भविष्य पुराणमा र स्मृतिमा बालक जन्मेको चारौ महिनाको बाह्र दिनमा यो संस्कार गर्नु पर्छ भनिएको छ ।[२०] यस्तै गरी गृह्यसूत्रले पनि यो संस्कार वालक जन्मेको तेस्रो वा चौथो महिनामा गर्नु भनिएको छ ।[२१]

नेवार समाजमा निष्क्रमण संस्कारको रूपमा वालक जन्मेको एक महिना पछि माईतमा घरमा 'मचावूम्ह लहिक बनेगू' भनी वालकको मामा घरमा आमा र बालकको स्याहार सुसारको लागि पठाउने कामको रूपमा निष्क्रमण संस्कारलाई लिने गरेको पाइन्छ ।[२२]

---

[१८] उही, पृ. ११ ।

[१९] उही, पृ. ८४ ।

[२०] उही, पृ. ८६-८७ ।

[२१] उही, पृ. ८७ ।

[२२] बज्रमुनि बज्राचार्य : *नेवा : संस्कार परिचय,* (नेवारी) (काडमाडौं: नेपाल मण्डल घ : चा : धुकु, ने.सं. ११२०, पृ. १० ।

**छ) कर्णभेद**

कान छेड्न गरिने संस्कारलाई कर्णभेद भनिन्छ । यसको सम्बन्धमा शुरूमा बच्चालाई कान छेड्नु भनेको रोगहरूबाट बचाउनु र श्रृङ्गारको लागि गहना प्रयोग गर्नको लागि भनिएको छ ।

बालक जन्मेको दशदेखि बार्‍ह अथवा सोर्‍हौं दिनसम्ममा कर्णभेद गर्नुपर्छ भनी बृहस्पतिले भनेको छ । आजभोली यसलाई संस्कारको रूपमा नगरिकन आफ्नो अनुकूल र बालकको स्वास्थ्यमा ध्यान दिई सुनार कहाँ लगी गराइन्छ भने कसै कसैले सियोद्वारा बुजरूकद्वारा पनि गराउने गरिन्छ ।

श्रीपती सुत्रले कर्णभेद दाँत आइसकेको बालक तर आमाको काखमा छदै गर्नुपर्छ भनिएको छ ।[२३]

**ज) अन्नप्राशन**

बालक जन्मेको पाँच अथवा छ महिना भएपछि विभिन्न ठोस आहार खुवाइने संस्कारलाई अन्नप्राशन संस्कार भनिन्छ । यो संस्कारलाई व्यवहारिक मान्न सकिन्छ किनभने आमाको दूधले मात्र पर्याप्त आहार शिशुलाई नपुग्ने अवस्थामा यो संस्कार गरी आमाको दूध सँगसँगै ठोस आहार खुवाउने गरिन्छ ।

विभिन्न शूत्रहरूमा यस किसिमको कर्मको उल्लेख गरिएको पाइन्छ, यसमा बालकलाई आमाको दूध छुटाई त्यसको सट्टामा अरू गाई वस्तुको दूध र अन्न फलफूल, मासु आदि खुवाउने कुरा लेखिएको छ । कतै कतै बालकलाई दही, मह, घ्यूको मिश्रण खुवाउने कुरा पनि लेखिएको छ । गृहशुत्रमा बालक जन्मेको छैठौ महिनामा यो संस्कार गर्नुपर्छ भनिएको छ ।[२४]

अन्नप्राशन गर्दा नेवार समाजमा विहानै बालकलाई नुहाई धुवाई गरी विशेष किसिमको कपडा *'तास'*बाट बनेको लुगा लगाउन दिइन्छ । यस कर्ममा मामाघर र मामाको बढी भूमिका हुने गर्छ । बालकको लागि विभिन्न सरसामानहरू लगायत सगुन मामाघरबाट ल्याइन्छ । मामाले बालकलाई बोकेर टोलको गणेश मन्दिरमा लगी खीर खुवाइन्छ । त्यसपछि घरमा अरू परिवार सदस्यहरूबाट खीर खुवाउने कार्य गरिन्छ । खीर खुवाउँदा बालकलाई विभिन्न उपहारहरू पनि दिने गरिन्छ । अन्नप्रानशन गर्दा छोरी भए पाँच महिनामा र छोरा भए छ महिनामा गरिन्छ । यस्तो गर्नुको कारण छोराभन्दा छोरी छिट्टै विकसित हुन्छ भन्ने मान्यता राख्नु हो ।

**झ) चूडाकर्म**

छोरा बच्चाको जन्मदेखि भएको कपाल खौरनु चूडाकर्म हो । नेवार समाजमा छोराको लागि "बूसँखा" गरी चूडाकर्म गरिन्छ भने छोरीको लागि 'इहि' गरिन्छ ।

---

[२३] उही, पृ. ९ ।

[२४] उही, पृ. ९४ ।

सुत्रहरूमा उल्लेख भए अनुसार कपाल काट्नु, दाढी काट्नु, नङ्ग काट्नु भनेको अशुद्ध तत्वहरूलाई फ्याँक्नु र खुशी समृद्धि प्राप्त गर्नु हो। सबैले कपाल खौरिनु भनेको स्वास्थ्यको दृष्टिकोणले राम्रो मानिन्छ।"[२५]

गृह्यशुत्रमा पहिलो वर्षदेखि तेस्रो वर्षको अन्त्यसम्ममा चूडाकरण गर्नुपर्छ भनिएको छ।[२६] अरू प्रमाणिक स्रोतहरूमा पाँचदेखि सात वर्षमा चूडाकर्म गर्दा राम्रो भनिएको भए पनि व्यवहारिकरूपमा जन्मदाको कपाल पटक पटक काटिसकेको भए पनि धार्मिक विधि पूरा गर्न उपनयन संस्कार गरिएको बेलामा पनि गरिन्छ। आ-आफ्नो धर्म अनुसार चूडाकर्म गरी कपाल खौरिदा टाउकोको माथिल्लो भागमा अलिकति कपाल 'आंगसा' बाँकी राख्छ भने बौद्ध धर्मावबलम्त्रीले राख्दैन।

नेवारहरूमा 'बूसँखा' गर्दा मामाले कपाल काटेको भावनामा कपाल काट्ने छुरी छोइदिन्छ भने काटेको कपाल भुईमा पार्नु हुँदैन भनि फुपूले काँसको थालमा थापेर नदिमा बगाउने गर्दछ।

इहि तीनदेखि नौ वर्षसम्मको कन्यालाई गरिने संस्कार हो। यसको मुख्य उद्देश्य नै केटीहरूलाई वैधव्य दोषबाट मुक्ती दिनु हो। यो संस्कार गर्दा अनित्य इश्वरसंग कन्याको विवाह गरिदिने चलन छ। यो संस्कारलाई नेपाली भाषमा 'बेल विवाह' पनि भन्ने गरिन्छ। हिन्दु र बौद्ध दुवै समाजमा इहिको चलन रहेता पनि यसको केही विधिहरू मात्र फरक हुन्छन्। हिन्दुहरू कन्याको विवाह सूवर्ण कुमार (श्री विष्णु) सँग भएको मान्दछन् भने बौद्धहरू बोधिचित्तलाई कन्या संकल्प गरेको मान्दछन्। इहिमा कन्याको नङ काट्दा फुपुले काँसको थालमा थापी नदीमा बगाउन लगिन्छ।[२७]

**ञ) अक्षराम्भ**

विद्या लेख्न सिकाउन गरिने संस्कार विद्यारम्भ संस्कार हो। यो संस्कारलाई धार्मिकभन्दा व्यवहारिक कर्मको रूपमा लिइन्छ। सभ्यताको अन्तिम उपलब्धिकोरूपमा विद्यारम्भलाई लिने गरिएको पाइन्छ। बोलीद्वारा भाषा व्यक्त गर्न जानिसकेपछि त्यसलाई लेखेर व्यक्त गर्ने कलाको रूपमा अक्षराम्भ भएको मानिन्छ।

वैदिक समयमा विश्वामित्र, बृहस्पति, मार्कडेय विद्याका गुरू मानिन्छ। विश्वामित्रका अनुसार पाँच वर्षको उमेरलाई विद्यारम्भको लागि उपयुक्त उमेर मानिन्छ।[२८]

तर आज भोलि यो संस्कारलाई धार्मिक रूपमा नगरिकन बच्चाले बोल्न र चिन्न सक्ने भएपछि नै विद्यालयमा पठाउने गरिन्छ। साधारणतया तीन वर्ष नाघेपछि नै विद्यालय पठाउने चलन चलेको देखिन्छ।

---

[२५] उही, पृ. ९६ ।

[२६] बलदेव जुजु, *नेवा : संस्कार व उकिया विधि,* (नेवारी), (काठमाडौं: बैद्धिक प्रतिष्ठान, ने.सं. १११९), पृ. ३२ ।

[२७] उही, पृ. १०२, १०३ ।

[२८] उही, पृ. १०६, १०७ ।

अक्षराम्भको लागि ठूलो उत्सवको आयोजना नगरिकन श्रीपञ्चमीको दिनमा सरस्वती मातालाई दर्शन गराएर *'ॐ न, मो, वागेश्वराय'* भनि विद्यारम्भ गराउने चलनपनि कुनै कुनै परिवारमा अझसम्म पनि गर्ने गरेको पाइन्छ ।

**ट) उपनयन (ब्रतबन्धन, वरेछुये)**

विद्यार्थी जीवनको शुरूवात उपनयन संस्कारबाट गरिन्छ । वैदिक कालमा यसलाई ब्रह्मचर्य जीवनको आरम्भको रूपमा वर्णन गरिएको छ । ऋग्वेदमा एकजना विद्यार्थीलाई उपनयन संस्कार गरिएको कुरा उल्लेख भएको छ । त्यस समयमा विद्यार्थीलाई "ब्रह्मचारी" र शिक्षकलाई "आचार्य" भन्ने गरिन्छ ।[२९] आजभोली ब्रतबन्ध गर्ने समयमा नै उपनयन संस्कार गरिन्छ ।

नेपाली/हिन्दु समाजमा उपनयन कर्म *'कयता पूजा'* (ब्रतवन्धन) गर्ने बेलामा नै गर्ने गरिन्छ । *'कयता पूजा'* छोरालाई गरिने संस्कार हो ।

छोरीलाई बाह्रा (गुफा) राख्ने संस्कार गरिन्छ । पहिलोपटक रजस्वला भएकी वा नभएकी छोरीलाई बाह्र दिनसम्म एउटै कोठामा थुनेर नै "बाह्रा तयेगु" (गुफा राख्ने) भन्ने गरिन्छ ।

बाह्रा राख्नुको मुख्य उद्देश्य नै छोरी नै यौवनावस्थामा प्रवेश पूर्व उसमा आउने शारिरीक परिवर्तन सम्बन्धी ज्ञान दिनको लागि हो । बाह्रा राख्दा बाऱ्हा कोठामा केटा मानिसको प्रवेश पूर्ण रूपले निषेध गरिन्छ । यसो गर्नुको अर्थ निशंकोच छोरीले आमा, फुपु, सानीआमा आदि वयस्क आइमाइहरूबाट यौन व्यवहार एवं शारिरीक अंगमा आउने परिवर्तन सम्बन्धी ज्ञान सजिलै लिन सकोस् भन्नु हो ।

**ठ) विवाह**

हिन्दु संस्कारमा विवाहको ठूलो महत्व छ । मानवको गृहस्थ जीवनको शुरूवात विवाहबाट हुन्छ । विवाह भनेको गृहस्थ जीवनको शुरूवातको लागि एउटा स्त्री र पुरूषलाई प्रणय सुत्रमा बाध्नु हो । जसबाट सन्तानको जन्म हुन्छ र वंश अगाडी बढ्छ ।

विवाहको महत्व वैदिककालदेखि रहेको छ भन्ने कुरा यसको बारेमा ऋग्वेद एवं अर्थववेदमा उल्लेख भएबाट बुझ्न सकिन्छ । विवाह सामाजिक आवश्यकता हुनुको साथसाथै एउटा व्यक्तिको लागि धार्मिक धारणाबाट पनि महत्व राख्दछ । एकजना व्यक्तिलाई त्यसवेला पूर्ण मान्दछन जुन वेला उसले विवाह गर्दछ । विवाह सामाजिक, धार्मिक धारणाबाट गर्नुको साथै सन्तान उत्पादन गरि आफ्नो वंशलाई अगाडी बढाउनु नै मुख्य उद्देश्य हो ।

[२९] उही, पृ. ११३ ।

सुत्र कालमा आठ किसिमको विवाहहरू हुन्थ्यो । जुन

१) व्रम्ह विवाह[३०]

२) आर्श विवाह

३) दैव विवाह

४) प्रजापत्य विवाह

५) गन्धर्व विवाह

६) राक्षस विवाह

७) असुर विवाह

८) पिशाच विवाह

नेवार समाजमा विवाहको विधि लामो हुने गर्दछ । विवाहलाई जीवनको महत्वपूर्ण पक्षको रूपमा लिइने गरेको पाइन्छ । हिन्दु, बौद्ध नेवारको विवाहमा विभिन्न महत्वपूर्ण क्रियाकलापहरूमा, सिन्दुरारोहण, कन्यादान, हंवकेगु मुख्य हुन् ।

**ड) भीमरथारोहण**

यो संस्कार मानिस बृद्धावस्थाको एउटा निश्चित उमेरमा नारी पुरूष दुवैलाई गरिने संस्कार हो । वुढा वुढीको जंको चारपटक सम्म गरिन्छ ।

१) ७७ वर्ष ७ महिना ७ दिन ७ पलामा

२) ८४ वर्षमा सह्रस चन्द्र दर्शन

३) ८८ वर्ष ८ महिना ८ दिन (झ्यालबाट माथि तान्ने)

४) ९९ वर्ष ९ महिना ९ दिन (घ्याम्पो फुटाएर गर्ने)

[३०] उही पृ. १५९, १६०, १६२, १६४, १६६, १६७, १६८, १६९ ।

# तेस्रो अध्याय
# नेवार संस्कार

## ३.१ नेवाः संस्कार

नेवार समाजमा हिन्दु र बौद्ध दुबैले आ-आफ्नो धर्म, परिस्थिति अनुसार संस्कार धर्मको पालना गर्ने गर्दछन् । जीवनलाई राम्रो ढंगबाट अगाडी बढाउन राम्रो पक्षहरूको मात्र साथको अपेक्षा राखी संस्कार गर्ने गरिन्छ । नेवारहरूले विशेष गरि दुई किसिमको संस्कार गर्ने गर्दछन्, जसमा गर्भ (प्राग) जन्म संस्कार, जीवन संस्कार छन् ।

प्राग जन्म संस्कारमा गर्भाधान, पुंरावन, सीमान्तोनयन संस्कार पर्दछन् । जीवन संस्कारमा मचावू व्यंकेगु (जातकर्म), नां: तयूगु (नामकर्म), मचाबू ब्यंकेगू (निष्क्रमण), मचा जा नकेगू ( अन्न प्राशन), न्हायूपं प्वाः खनेगु (कर्णभेध), आखः स्यनेुगु (विद्यारम्भ), बूसंखाय् (चुडाकरण), इहि (चूडाकर्म), कयूतापूजा (ब्रतबन्धन), बाह्रा तयेगु (उपनयन), इहिपा (पाणिग्रहण) पर्दछन् । जीवन संस्कारमा बाल संस्कार, प्रौढ संस्कार र बृद्ध संस्कार गरी तीन भागमा विभाजन गन सकिन्छ । बाल संस्कारमा मचाबू ब्यंकेगु, ना तयगु, मचाबू लहिक वनेगु, मचा जा नकेगु, न्हायप प्वाः खनेगु, आखः स्यनेगु, चूडाकरण, बुसंखाय, इहि, केयूता पूजा, (वरे छुये), बाह्रा तयेगू पर्दछन् । पाणिग्रहण (विवाह) वयस्क संस्कार हो । बृद्ध संस्कार भनि “जंक्व” (भीमरथारोहण) गर्ने गरिन्छ ।

बौद्ध समाजमा संस्कारका चरणहरूलाई दशकर्म भनि स्वभाविक कर्म भनि अपनाएको पाउँछौ भने हिन्दुहरू संस्कार कर्मलाई संस्कार धर्म भनि अपनाएको पाउँछौं । आ-आफ्नो समाजको धर्म र चलन अनुसार यि संस्कारको विधिमा केही भिन्नता हुन सक्छ तर आशय एउटै हो ।

नेवाः समाजले गर्ने संस्कारहरू छोरा छोरीको लागि छुट्टा छुट्टै गरिन्छ । बुसँखाये अथवा केयूता पूजा छोरालाई गरिन्छ भने इहि, बाह्रा तयेगु छोरीलाई गरिन्छ । विवाह (पाणिग्रहण) दुवैलाई गरिन्छ ।

### ३.२ नेवार समाज

| | हिन्दु नेवार | बौद्धमार्गी नेवार |
|---|---|---|
| **पुरोहित वर्ग** | देव ब्राम्हण | गुभाजू र बज्राचार्य |
| **उच्च वर्ग** | श्रेष्ठ<br>पाँचथरे श्रेष्ठ<br><br>ज्यापू | शाक्य (बरे) भिक्षु<br>उदास (तुलाधर, स्थापित) |
| **तल्लो वर्ग** | गथु (माली)<br>नौ<br>कोशा<br>चित्रकार (पूं)<br>छिपा (रन्जितकार)<br>मानन्धर (सालमी)<br>कौ | |
| **शुद्र** | बलामी - संघट (धोवी)<br>भा<br>कसाइ<br>कुशले अथाव जोगी<br>पोडे - कुल्ला<br>च्यामे<br>हलाहुलु | |

*Source: Gopal Singh Nepali, United Asias Publication Bombay, 1964*

*साधारणत नेवार समाज यस किसिमको जातको समुहबाट बनेको हुन्थ्यो ।*

बिभिन्न संस्कार, चाडपर्व आफ्नो थर अनुसार विभिन्न तरीकाले मान्ने गर्दछन् । यिनीहरूको प्राग जन्म संस्कार, जन्म संस्कार, मृत्यु संस्कार फरक फरक विधी अनुरूप गर्ने गर्दछ । इहि नेवार समाजमा छोरी बच्चाको लागि नाबालक अवस्थामा हुँदा गरिने संस्कार भएता पनि सबै थरका नेवारहरूले इहि गर्ने गर्दैनन् । च्यामे, रजक, कुशले, जस्तो तल्लो थर मानिने नेवारहरूले गर्ने गर्दैन । कर्माचार्य, प्रधान, श्रेष्ठ आदिले अनिवार्य रूपमा इहि गर्ने गर्दछन् ।

हिन्दु नेवार समाजमा राजोपाध्याय पूरोहित वर्गमा पर्दछ । यिनीहरूले अरूलाई इहि गराउने गर्दछन् तर उनीहरूको समुदायमा इहि गर्ने चलन देखिदैन । विवाह संस्कार गर्ने वेलामा नै पहिले इहि गरेपछि विवाह गर्ने चलन देखिन्छ ।

### ३.३ नेवाः विवाह

मानव जीवनलाई अगाडी बढाउन विवाहको ठूलो महत्व छ । नेवारहरू विवाहलाई मानविय आवश्यकतामा एउटा आवश्यकता मानी गर्ने गर्दछन् भने प्रायजसोले आफ्नो वंश अगाडी बढाउन छोराको जन्मलाई बढी जोड दिन्छन् । नेवारहरूमा केही थरहरूले विवाहलाई आर्थिक उन्नतिको लागि थप श्रम शक्तिको रूपमा पनि लिने गरिएको देखिन्छ ।[३१] यस किसिमले विवाहलाई सामाजिक आवश्यकता एवं आर्थिक उन्नतिको लागि गरिने संस्कार पनि मानिन्छ ।

नेवारहरू विवाहलाई 'इहिपा' भन्ने गर्दछन् । विवाहमा विभिन्न देवदेवीको पूजा गर्नुको साथै विभिन्न विधी विधानवाट सम्पन्न गरिन्छ । नेवार केटीहरूको पहिलो विवाह कन्यावस्थामा नै सुवर्ण कुमार (नारायण देवता) सँग गरिन्छ । त्यसैले नेवार केटीहरू कहिल्यै पनि विधवा हुनु नपर्ने भन्ने सोच राखिन्छ । कसै कसैले इहिलाई यौन स्वतन्त्रता दिन बनाइएको संस्कार पनि भनिएको छ । इहि गरिसकेपछि जतीपटक पनि विवाह गर्नु हुन्छ भन्ने सोच चाहीं गलत हो ।[३२] नेवार विवाह धार्मिक कार्यबाट हुने भएता पनि सम्बन्ध विच्छेद गर्न, पुनविवाह गर्न कुनै पनि धार्मिक विधीको सहायता लिनु नपर्ने हुनाले नेवार अरू जाती भन्दा फरक देखिन्छ ।

साधारणतया नेवारहरू विवाहको लागि सोह्र देखि बीस वर्षको उमेरलाई विवाहको लागि योग्य उमेर मान्दछन् भने बाऱ्हा (गुफा) राख्न बाह्र वर्षकै उमेर उपयुक्त मान्दछन् र इहि गर्न पाँच देखि नौ वर्षको उमेरलाई उपयुक्त मान्दछन् ।

हिन्दु र बौद्ध दुवै समाजमा छोरी नावालक अवस्थामा छदा नै इहि गर्ने गर्दछन् । हिन्दुहरू इहिलाई सुवर्ण कुमार वा बेलसँगको विवाह भन्दछन् भने बौद्धहरू बौद्धीचित्त वा बेलसँगको विवाह भन्दछन् । कुनै हिन्दु नेवारहरू कन्यालाई आफ्नो कुल देवताको संरक्षकत्वको लागि इहि गरेको भन्छन भने कुनै बौद्धहरू कन्या संकल्प गरेको भन्छन् ।

### ३.४ इहि संस्कारको परम्परा

इहि नेपालमा नेवार समाजमा मात्र छोरी कुमारी अवस्थामा छदा नै गरिने विशेष किसिमको संस्कार हो । यो संस्कारको चलन कहीलेदेखि शुरू भएको हो भनि एकिन गरी भन्न सकिने लिखित प्रमाण अहिलेसम्म पाइएको छैन ।

पूर्ण रूपमा हुर्केको केटीलाई मात्र विवाहको लागि योग्य मान्दै, दुलहाको घर, परिबार हुनुपर्ने जहाँ दुलहीले एउटा साम्राज्ञीले जस्तै राज गर्न पाउन पर्ने कुरा ऋग्वेद, अथर्ववेदका ऋचाहरूमा उल्लेख गरिएको छ ।[३३]

सर्वोच्च अधिकार युक्त दुलहीलाई बढी जोड दिइएको हुनाले र वालिका दुलहीबाट यस्तो सम्भव हुन नसक्ने हुँदा उक्त समयमा वालविवाहको प्रधानता नरहेको सर्वोच्च अधिकार युक्तबाट

---

[३१] नेपाली, पूर्ववत् पृ. १९८ ।

[३२] डा. चुन्दा बज्राचार्य *इहि,* "स्वक्वःगु इहि मुनेज्या", स्मारिका २०५४, पौ ३ ।

प्रष्ट बुझिन्छ । यस्तै गरि विवाहीत जोडी योग्य प्रेमी, प्रेमीका हुन, श्रीमान र श्रीमती आफ्नो वाल वच्चाहरूको योग्य अभिभावक हुन वैदिक संस्कारले विवाहीत जोडीको उमेर पूर्ण विकसित हुनुपर्छ भनिएको छ । वैदिक विवाहले विवाहको हरेक पाइलामा विवाहीत जीवन व्यतित गर्न पूर्ण सक्षमको आवश्यकता शारीरिक सन्तुष्टी, मानसिक सन्तुष्टि, पारिवारीक सन्तुष्टि आदि सम्पूर्ण गुणहरूलाई मान्यता दिएको पाइन्छ ।[३४]

ऋगवेदमा केटी मानिसको जीवनमा चार पटक विवाह हुने कुरा उल्लेख गरिएको छ । जसलाई "चतु विवाहमा" वर्णन गरिएको छ । सबभन्दा पहिले सोम (चन्द्रमा) सँग, त्यसपछि गन्धर्वसँग, पछि सूर्यसँग र अन्त्यमा मानिससँग हुने कुरा लेखिएको छ ।[३५] यसरी हुने चार पटकको विवाहलाई नै नेवार समाजमा केटीहरूलाई गरिने विभिन्न संस्कारसँग तुलना गरिएको छ । जस्तै :

प्रथम विवाह - सोमसँग इहिमा
दोश्रो विवाह - गन्धर्वसँग बाह्रा (गुफा) राख्दा बाह्रा ख्यासँग
तेश्रो विवाह - बाह्राको अन्तिमदिन सूर्यसँग
चौथो विवाह - मानिससँग

यसरी वैदीक समयमा हुने चार पटकको विवाहको सन्दर्भलाई नेवार समाजमा हुने विभिन्न संस्कारमा गरिने विधिसँग जोडेको भएपनि नेवारहरूले तीन पटक संस्कारको रूपमा यसलाई मान्दै आएको देखिन्छ । जुन इहि, बाह्रा (गुफा), इहिपा (विवाह) हुन् भनेर भन्ने चलन पनि देखिन्छ ।

इहिलाई विवाह नै हो भनेर मानि आएको देखिन्छ भने यो विवाहलाई स्कण्ड पुराणको आधारमा लेखिएको स्वस्थानी ब्रत कथाको कथासँग पनि जोडिएको देखिन्छ । यस ग्रन्थमा सतीदेवीको विवाह हुँदा विष्णुसँग सम्पूर्ण विधि सकिएपछि कन्यादान गर्ने समयमा सतीदेवीको हात महादेवको हातमा छल कपट गरी महादेवलाई गरेको जस्तै : इहिमा पनि सुनको प्रतिमारूपी विष्णुसँग विवाह विधी पूर्ण भएपछि वेलरूल रूपी वेल (महादेव) सँग सतिदेवीको विवाह भएको मानि 'इहि' लाई वेल विवाह भनिएको देखिन्छ ।

यस्तै गरी स्वस्थानी ब्रतकथाकै अर्को कथा अनुसार हिमालय पर्वतकी छोरी पार्वतीलाई विष्णुसँग विवाह गरिदिन्छु भनी बचनवद्ध भई 'वाकदान' पछि विष्णु पार्वतीसँग विवाहको लागि आउँदा पार्वती भागेर जंगलमा गई शिवको आराधना गरी बसेपछि महादेवसँग विवाह हुन्छ । यहाँ पनि पार्वतीको विष्णुसँग विवाह हुने कुरा बचनबाट भईसकेपछि महादेवसँग विवाह भए जस्तै नै इहिलाई लिइएको छ ।

यस्तै किसिमको अर्को कथा हिमवत खण्डमा पनि उल्लेख भएको छ । जस अनुसार महादेव र पार्वती नेपाल मण्डलमा घुम्दै गर्दा वागमतीको तीरमा एकजना युवती एउटा लास अगाडी रूदै गरेको देखेर पार्वतीले तिमी किन रोएको भनी सोध्दा मेरो यस्तो उमेरमा मेरो लोग्ने मऱ्यो अब कसरी जीन्दगी बिताउने भनि डाँको छाडी रून थाल्यो । त्यो देखि पार्वतीको मन साह्रै दुख्यो र महादेवलाई केटीहरूको यस्तो किसिमको वैधव्य दोष हटाउन कुनै नियम बनाउनु पऱ्यो भन्ने

---

[३३] उही, पृ. १८३ *"साम्राज्ञयधि श्वशुरेषु सम्राज्ञयुत देवृषु ।*
*ननान्दुः सम्राज्ञथेधि सम्राज्ञयुत स्वश्वा ॥"*

[३४] उही, पृ. १८२

[३५] हरि राम जोशी *'चतु विवाह'*, (पाटनः रोलम्बाः नं. २० जुन २०००) पृ. २-५ ।

अनुरोधमा महादेवले विवाह भन्दा पहिले विष्णु भगवानसँग गरिदिने र म (महादेव) सबै केटा मानिसहरूमा प्रवेश गर्छु र पछि मसँग विवाह हुन्छ । नित्य सनातन भगवानसँग विवाह भएपछि कहिल्यै वैधव्य हुनु नपर्ने विधि अनुसार 'इहि'को चलन चलाइएको हो भन्ने कुरा पनि लेखिएको छ ।[३६]

'इहि' नेपालको नेवारहरूको मौलिक संस्कारको रूपमा लिन सकिने भएपनि स्वयम्भूलाल श्रेष्ठको 'भिजी' मा दक्षिण भारतमा बस्ने नायरहरूले मनाउने "तालि केट्टु" अथाव 'केट्ट कल्याणम' भन्ने संस्कारको आशयसँग केही समानता रहेको देखिन्छ र "तालि केट्टु" गर्दा पनि सात देखि एघार वर्षको उमेर सम्ममा छोरी बच्चालाई विजोड उमेर पारेर गरिन्छ । यो संस्कार पनि सामुहिक रूपमा गरिन्छ । विशेष किसिमको कपडा 'तालि' (कावःबला) घाँटीमा बाँधी केटा र केटीको बीचमा लोग्ने स्वास्नीको सम्बन्ध गाँसिन्छ । यसको चार दिनपछि कपडा (कचिःकाप) च्यातेर सम्बन्ध विच्छेद गरिन्छ । यो संस्कारको लागी केटा खोजिन्छ । 'तालि केट्टु' नगरिकन कसैसँग यौन सम्बन्ध राख्न नहुने मान्यता राख्ने गरिन्छ भने तालि केट्टु सकिएपछि विवाहको लागि योग्य भएको पनि मान्ने चलन देखिन्छ । यो संस्कार साँच्चिकै विवाह नभई लोकाचार मात्र मानिन्छ ।[३७] यो संस्कारको आशय र नेवारहरूले गर्ने इहिको अभिप्राय केही मिल्दो भएको कारणले नान्यदेवसँग आएका नायरहरू नै नेवार भएका र यहिंकै स्थानीय वासीसँग मिलीजुली बस्न उनीहरूको बोलीचाली अपनाएर आफ्नो चलन पनि केही यहाँ चलाएको होकी भनी अनुमान गरिएको देखिन्छ ।

नेपालमा ब्राम्हण, क्षेत्री जातीमा व्यापक रूपमा वालविवाहको चलन थियो । छोरी पाँच वर्षको हुँदा देखि नै विवाह गर्नुपर्छ भन्ने सोचमा दुलहाको खोजी शुरू हुन्थ्यो । यस कुरालाई विभिन्न धार्मिक ग्रन्थहरूको प्रभावको रूपमा पनि लिन सकिन्छ । हिन्दु धार्मिक ग्रन्थ 'स्वस्थानी व्रत कथा'[३८] मा गोमा पाँच वर्षको उमेर हुँदा देखि पिता सोम शर्माले वरको खोजी गर्न थालेको र खोज्दा खोज्दा कोही नभेट्दा गोमा सात वर्षकी हुँदा शिवभट्ट नाम गरेका सत्तरी वर्षको वृद्धसँग गोमाको विवाह गरिदिएको उल्लेख गरेको छ ।

छोरी कन्यावस्थामा छदा नै कन्यादान गरीदिए स्वर्गमा वास पाइने, सय गाई दान गरेको पुण्य प्राप्त हुने, अश्मेघ होम गरेको फल पाइने इत्यादी अनेक विश्वासमा कन्यादान दिने गरिन्थ्यो । यस किसिमको विवाहको कारण छोरीले जीवनमा अनेकौं यातना सहनु पऱ्यो । वालविवाहको कारणले ल्याएको विकृतिबाट मुक्त हुन क्रान्तिकारी सुधारमूलक माध्यमको रूपमा इहिलाई संस्कारको नामबाट आध्यात्मिक ढंगबाट पूरा गरिने परम्पराको शुरूवात भएको हो भन्ने पनि गरिन्छ ।

[३६] बुद्धिसागर पराजुली , *स्वस्थानी व्रत कथा,* (काठमाण्डौं: रत्न पुस्तक भण्डार, वि.सं. २०३४), पृ. ३५ ।

[३७] पूर्ववत, पृ. ८६ ।

[३८] उहि, पृ. ४७, ४८ ।

श्री डिल्ली रमण रेग्मीले आफ्नो पुस्तक *'प्राचीन नेपाः'* मा इहिबारे यसरी लेखेका छन् । जस अनुसार नेवारहरूमा वालविवाहको चलन छैन तर उनीहरू आफ्ना छोरी चेलीलाईं वैदिक तथा स्थायी पत्नीत्वको सिद्दान्त लिएर जीवनभर विधवा हुनबाट बचाई राखेको छ ।[३९]

इहिले नारीलाई सम्मान गरेको देखिन्छ किनभने लोग्ने मर्‍यो भने नारीले विधवा भई जिउन पर्ने र विधवालाई समाजमा हेलाको दृष्टीले हेर्ने हुँदा देवतासँग विवाह गरी नारीलाई सधैं सधुवा भई बाँच्ने अधिकार प्रदान गरेको छ । त्यसैले समाजमा चलेको विधवा प्रतिको नराम्रो भावना हटाउन शुरू भएको चलनको रूपमा इहिलाई लिने गरेको पनि देखिन्छ ।

त्यसवेला मात्र होइन की अहिलेसम्म पनि विधवालाई ठूलो साइतको पूजाआजामा मुख्य भूमिका निर्वाह गर्न दिइदैन । सगुन दिन, रातो टिका लगाउन दिन पर्ने काम विधवाबाट गर्न लगाइदैन । यस्तो किसिमको अवहेलनाबाट बचाउन इहिको प्रचलन थालिएको हुनु पर्ने विचार समाजमा देखिन्छ ।

गोपाल राजवंशावलीलाई नेपालको पहिलो वंशावलीको रूपमा मानिएको छ । यसमा कतै पनि 'इहि' भन्ने शब्द उल्लेख भएको देखिदैन । नेवार राजाहरूको राज्य कालमा पनि कुनै पनि संस्कार विषेश विवाहको संस्कारमा इहि या इहिपा भन्ने शब्द परेको देखिदैन । विवाहलाई विवाह नै भनि उल्लेख गरिएको देखिन्छ ।[४०]

---

[३९] डिल्ली रमन रेग्मी; *एनिशेन्ट नेपाल,* (अनशारी रोड, डरयागन्ज, न्यू दिल्ली, इ.सं. १९६५), पृ. २८७-२८८ ।

[४०] धन बज्र बज्राचार्य, *दि गोपालराज वंशावली,* (नेपाल रिर्सच सेन्टर पब्लिकेशन, ई.सं. १९८५) , पृ. ३७ - ७० ।

"स्वरवंस्सज श्री हरिचन्ददेवस मानवेन : विवाहङ् करोती श्री नायक देवी ॥ कति पयवर्षान्तरेण शिष्टेन विष भक्षयतेन मृत्यु । २६ ख

अष्ट लोकपालावतार, श्री जयस्थिती राजमल्लदेव विजयी भवे तस्य विवाह

स्वेदश कहलाया भरी द्वि जराजजुज जाती कस्त

भास गजा मुलमीस पण्डया भनकु भाटोन् ॥ स ५०४ ६१ (क)

जेष्ठ शुदि १५ ॥ ॥ शुभ : विवाह जुदं

.... का विवाह चेतला थोव तिराख वृहस्पतिवार चा ॥ ६२ (ख)

ने.सं. ४४६ (वि.सं. १३८३) आषाढ पूर्णिमाको दिन शतिती रुद्रम मल्लको स्वर्गवास भयो । चार जना पत्नीहरू सती गए । ६२ (क)

सउदर उभ्रा जीवा भारोस शुर्ज्जस गजुहि टास्थं, वीर नेत चुलास खास्यं श्री श्री धर्म्मदेव ठाकुरसन प्रसादर पा २१ ठाकुरस विवाहया नन्दे" ॥

# चौथो अध्याय

## ४.१ इहिको अभिप्राय

नेवार समाजमा कन्यालाई इहि गर्नुको अभिप्राय आफ्नो कुल देवताको संरक्षकत्वको लागि बेलफल (शिवको प्रतिक फल) लाई साक्षी राखी कन्या सुम्पने विधी हो । यसमा आफ्नो आगः (कुल देवता) देखि टोलको संरक्षक भएर बसेको देवता, टोल बाहिरको देवताहरू सम्पूर्णलाई पूजा गर्ने गरिन्छ ।

यसरी देवताहरूलाई पूजा गर्नुको अर्थ आफ्नो कन्याको इहिमा सबैलाई निमन्त्रणा गर्नु हो त्यस्तै गरि मरिसकेको व्यक्तिहरूलाई पितृदेवता मानि उनिहरूको शुभाशिर्वादको लागि *बयलिं सराद्ध* गरिन्छ ।

इहि गर्नु विवाह होइन भन्ने अभिप्राय बलदेव जुजुको छ । यसमा गरिने कुनै पनि विधिलाई विवाह भन्न मिल्दैन । यसमा सिन्दूरारोहण गरिने भएको हुनाले र कन्यादान गरिने हुनाले विवाह भनिएको हुनसक्छ । तर यहाँ हुने सिन्दूरारोहण र कन्यादानको अभिप्राय अर्कै छ । थकालि नकिंले कन्याको सिउदोमा सिन्दूरारोहण गर्नुको अर्थ आफ्नो आगक्षे (कुलको देवताको घर) मा भित्राउन दिइएको चिन्ह हो । जसरी केटा बच्चालाई बुसँखाय गरि आगक्षेमा भित्राइएको चिन्ह 'आगँसा' राखिन्छ, सिन्दूर लगाई दिनुको अभिप्राय पनि त्यस्तै हो । हाम्रो समाजमा छोरालाई भन्दा छोरीलाई बढी संरक्षण दिने गरिन्छ र भनिन्छ कि छोरीको इज्जत सियोको टुप्पामा अडेको हुन्छ । छोरी मान्छेलाई समाजका नराम्रा दृष्टिबाट बचाउनु पर्छ अन्यथा एकपल्ट जीवन बिग्रियो भने सधैंको लागि बिग्रन्छ भनि अलि बढी नै संरक्षण दिने चलन भए अनुसार आफ्नो हुर्कन लागेको छोरीलाई आफ्नो क्ुल देवताको संरक्षकत्व प्राप्त होस भन्ने भावनामा बेलफल जस्तो चाँडै नकुहिने फल जसलाई शिवको प्रतिक मानिन्छ । त्यस्तो फललाई साक्षी राखी क्ुल देवतालाई कन्या सुम्पने विधी नै इहि हो ।

हामी धार्मिक आस्थामा बाँचेका हुन्छौ जनुसुकै कार्यको लागि सबभन्दा पहिले इश्वरको आव्हान गरी राम्रो कृपा दृष्टि भई राखोस भन्ने चाहन्छौ त्यसैले हाम्रो समाजमा जुनसुकै कार्य शुभारम्भ गर्नु अघि इश्वरको पूजा आराधना गर्छौ । खाना खानु अघि पनि अलिकति देवतालाई चढाएर मात्र खाने गर्दछौं । हामीले जीवन जिउनको लागि उपभोग गरिराखेको अति आवश्यक पानी, जमिन, अन्न, एवं, खोला नाला आदि सम्पूर्णलाई देवता नै हो भनि पूजा गर्छौ । जसले हाम्रो जीवनमा सहयोग गर्छ हामी त्यसलाई देवता नै मान्छौ त्यसैले हामी के पनि भन्ने गर्छौ भने यदि हामीलाई कसैले सहयोग गऱ्यो भने त्यो त देवता नै सरह रहेछ' भन्छौ र कृतज्ञता व्यक्त गर्छौं । त्यसैले इहि गर्दा गरिने पूजाविधिमा सबभन्दा पहिले *'पिथपूजा'* पढाइन्छ । परिबार, टोल मात्र नभई यस भन्दा बाहिर परेको देवताहरू सम्पूर्णलाई निमन्त्रणा गर्न पिथिपूजा पठाइन्छ । यसपछि आफ्नो घरभित्र रहेको आगः, द्यः टोलको रक्षक भएर रहेको टोल गणेश र तेत्तीस कोटी देवतालाई पूजा पठाइन्छ । यसलाई हामीले के बुझ्नुपर्छ भने इहि गरिने ठाउँमा हामी र हाम्रो समाजसँग सम्बन्धित देवताहरू हाम्रो सहयोगको लागि हुन्छ भन्ने भाव राख्नु हो ।*'दैव दिने पितृ हर्ने'* भन्ने भनाइलाई मानी आदर गर्छौं । त्यसैले कुनै पनि ठूलो काम शुरू गर्नुअघि पितृ देवतालाई आव्हान गर्न बयलिं सराद्ध सबैले गर्ने गरेको पाउँछौं ।

इहिमा एकसय आठ चोटी कन्याको टाउकोदेखि खुट्टा र खुट्टादेखि टाउकोसम्म दुस्वकां लगाई दिनुको अर्थ बन्धनमा राख्नु हो । दुस्व दिन (पहिलो दिन)मा यो दुस्व काः लगाउन दिनुको अर्थ यो लगाई सकेपछि घरबाट बाहिर निस्कनु हुँदैन भनि बन्धनमा राख्नु हो । यसरी नै इहिमा *थायभु* खुवाउनुको अर्थ हो कन्याको आत्मशक्ति बढि भई कुनै पनि कार्य सफल गरी अगाडी बढ्न सकोस भन्ने मनोकामना राख्नु हो ।

इहिको दोस्रो दिनमा नौनीले नङ्ग काटी सुद्धिकरण गरिदिइसकेपछि थकाली नकिंले कन्याको सिउँदोमा सिन्दूरारोहण गरी आगःछेँमा भित्राएको चिन्ह लगाइदिन्छ । यसपछि *इहिपर्सि* विशेष किसिमको वस्त्र कन्यालाई लगाउन दिइन्छ । यसरी इहिपर्सि दिनुको अर्थ हो कन्यालाई ठूलो भयौ भनि आइमाइको रूप दिनु हो । इहि गर्ने उमेर अगाडीसम्म छोरा र छोरीलाई कुनै फरक किसिमको लुगा लगाउन दिइदैन । जन्मनासाथ छोरा जन्मेपनि छोरी जन्मेपनि (इचाकाप) कपडाको टुक्रामा नै बेरेर राखिन्छ । त्यसपछि पनि भोटो र शुरूवाल नै लगाउन दिइन्छ । यसरी लुगा लगाईमा कुनै भेद गरिदैन तर इहि गरिसकेपछि छुट्टै किसिमको लुगा लगाउन दिइन्छ । यसपछि कन्यादान गर्न भनि तामाको थालीमा बेलफल, बुके सुन (काँचो सुनको प्रतिमा) राखी आफ्नो कुल देवता सम्झी पूजा गर्न लगाईन्छ । कन्याको बुबाले छोरीलार्य काखमा राखी छोरीको बुढी औंला समाति हातमा कुश, तिल लिई कन्याको आमाले गाईको दुधको धाराद्वारा तर्पण गर्न लगाइन्छ । यसरी कन्यादान गरी कनयालाई कुलदेवतालाई सुम्पिन्छ । यसरी कन्या सुमिपनुको अर्थ आफ्नो समाजमा जिम्मेवार सदस्यको रूपमा नीति नियम पालना गराउनको लागि हो । इहिमा खुट्टाले मास पिसाउने विधि दुबै दिनमा गरिन्छ । यो विधि सकिए पछि यसको अघिल्लतिर 'सलिं' मा अर्को 'सलिं' घोप्ट्याएर राखिएको हुन्छ । खुट्टाले मास पिस्न लगाउने विधि गराइएको हुदा जन मानसमा इहि घर व्यवहार सिकाउन गराइएको संस्कार भन्ने गरेको पाइन्छ तर वास्तवमा यसको अर्थ हुर्कन लागेको वा वयस्क हुने क्रममा रहेको कन्यालार्य नयाँ काम (विद्या आर्जन गर्दै जाने जस्तो कार्य) मा प्रवेश गर्न लागेको हुनाले विभिन्न समस्या आउन सक्छन् त्यसलाई समाधान गर्दै मार्गको कठिनतालाई हटाउदै अगाडी बढ्नु पर्छ भन्नु हो । यस विधिले पनि इहि विवाह र घरव्यवहार सिकाउने संस्कार नभएको प्रष्ट पार्दछ । यहाँ सुनको टुक्रालाई कसैले सुवर्ण कुमार कसैले माहादेवको छोरा कुमार, कसैले नारायण देवता मान्दछ भने बौद्धमार्गिहरूले बुद्ध भगवानको रूप बोधिसत्व वा बोधिचित्त मान्ने गर्दछ ।

इहि गर्नु विवाह नभई समाजमा प्रवेशको लागि गरिने संस्कार जसबाट आफ्नो कुल देवताको संरक्षकत्व प्राप्त गर्नु हो । इहि गरिसकेपछि एउटा जिम्मेबार नागरिक सरह कन्याले सम्पूर्ण व्यवहारहरू जस्तो जन्म मृत्यूले ल्याउने जुठो र दैनिक व्यवहारमा जुठो चोखोका व्यवहारहरू सबै बार्नुपर्ने हुन्छ । इहिलाई विवाह होइन भन्ने बलियोतर्क अर्को के पनि दिन सकिन्छ भने छोरीको विवाह हुनु भनेको आफ्नो गोत्रबाट अरूको थर गोत्रमा जानु हो र विवाह भई सकेपछि छोरीले जन्म घरको कोही मऱ्यो भने चार दिन मात्र बार्नु पर्छ तर इहि गरिसकेपछि भने न त थर गोत्र परिवर्तन हुन्छ न त अरूको घरमा पठाइन्छ । यदि प्रतिकात्मकै विवाह भएपनि यदि घरमा कोही मऱ्यो भने उसले जुठो नबारे पनि हुने हुनु पर्नेमा जुठो बार्नु नै पर्ने भएको हुनाले यसलाई विवाह भन्न मिल्दैन । इहि गरिसकेपछि छोरीको आफ्नो आमा बुवा नै अभिभावक

रहिरहन्छ। यदि विवाह भएको हो भने उसको अभिभावक नै अरूहरू हुन्थ्यो। नेवार समाजमा विवाह हुनको लागि नगरी नहुने प्रमुख विधि *'हंवकेगु'* हो। हवंकेगु गर्दा दुलहा दुलहीलाई संगै राखी सहभोजन गराए पछि मात्र विवहको विधि पूर्ण हुन्छ। विवाहित जोडीलाई पति र पत्नि मानिन्छ। इहिमा हंवकेगु विधि नहुने हुनाले पनि इहिलाई विवाहको रूपमा नलिइकन आगःछे भित्र भित्र्याउने विधि र आफ्नो कुल देवताको संरक्षकत्व प्राप्तिको लागि गरिने संस्कार मान्नु पर्छ।

## ४.२ बौद्ध समाजमा इहि गराउँदा गरिने विधिहरु[४२]

नेवार समाजमा जुनसुकै संस्कार वा कार्य गर्दा साधारण पूजा त जहिले पनि गर्ने गरिन्छ। त्यसवाहेक विशेष कार्य गर्दा गरेको त्यसको लागि विशेष पूजा विधि गर्ने गरिन्छ।

### पहिलो दिनको पूजा विधि

सबैभन्दा पहिले इहि गर्ने कन्यालाई नुहाइ धुवाई गरेर घरमा निंचीं (चोखो) पार्ने काम हुन्छ। इहिको लागि कन्यालाई दुलहीको जस्तो लुगा, गहना लगाइ दिएर सिंगारिन्छ। लुगामा तासको (दुपट्टा) को साडी, चोलो लगाइदिन्छ। गहनामा घाँटीमा टीकको माला (सुनको घाँटीमा लगाउने मोटो बुट्टा कोरीएको गलाबन्दी), टाउकोमा लुंस्वा (सुनको फूल), हातमा प्याख अंगू (चाँदीको पाता लामो आकारमा बनाइएको) लगाइदिने गरिन्छ। यी बाहेक आजभोली विभिन्न अहिले चलेका गहनाहरू पाउजु, चूरा आदि लगाई सजाउने चलन बढी नै देखिन थालेको छ।

इहि पूजा गर्नको लागि सबभन्दा पहिले लसकुस (स्वागत) गरी गुरूमाजूले कन्यालाई मण्डलमा प्रवेश गराइन्छ। यसपछि गुरूमण्डलाश्चरण गरी पञ्चगव्य (शरीर सोधन) दिइन्छ। त्यसपछि शिष्याधिवासन (गुरू-शिष्य ग्रहण) गरिन्छ। यसपछि अम्व, हाम्व (अमला र तील)ले स्नान गराइन्छ र क्वंचिक (सिंगारको सामग्री जौ, चना, चामलको पिठो, तेल) द्वारा श्रृंगार गराइसकेपछि इहि पतासि (विशेष प्रकारको कपडा, रातो र पहेंलो धर्को धर्को भएको) दिइन्छ। इहि पतासि लगाउन दिएपछि गुरूमाजू (मूल गुरूजूको जहान) द्वारा सिंच छाये (सिन्दुरारोहण) हुन्छ। यसपछि मोकि (निधारमा अष्ट मंगल सहित पूर्णकिलश लेखिएको कागज निधारमा लगाउने कार्य हुन्छ। यसपछि शतभेदिका (पहेंलो रङ्गको पाँच वटा त्यान्द्रोको एउटा बनाएएको काँचो धागो) टाउको देखि पैतलासम्म गरी २१ चोटी नाप्ने काम हुन्छ (हेर्नुस चित्र फलक नं. १२)। यस कार्य पश्चात पहिलो दिनको पूजा समापन हुन्छ। यस दिनलाई दुस्व (प्रवेश) को दिन पनि भन्ने गरिन्छ।

### दोश्रो दिनको पूजा विधि

लसकुस र अरू पूजा सकिएपछि कन्यालाई खुट्टाले मास पिस्न लगाइन्छ (हेर्नुस चित्र फलक नं. १७) र पछि *अम्बः व हाम्वः* (अमला र तिल) ले नुहाउन लगाइन्छ। सलाःपा (विशेष माटोको भाँडो जसमा अष्टमंगलको चिन्ह बनाइएको हुन्छ) मा वेल, सखिपः, पानको पात, ज्योना लप्ते (विशेष प्रकारको रूखको पात) राखि पूजा गर्न लगाइन्छ। तत्पश्चात इहि गरिएको कन्याको हातमा नन्दावलि (स्वस्तिको चिन्ह) लगाई त्यस हातमा ज्योना लप्ते राखी त्यसमा पानको पात, ताय् (लावा), आखें (अक्षता), ब्याः (वेलफल) राखी हात पोको पारी सखिखिपः (विशेष डोरी) ले बाँधिन्छ। यो विधिको अन्त्य बुबाको काखमा राखी गरिन्छ।

[४२] बद्रीरत्न बज्राचार्य; *दशकर्म संस्कार धर्म,* (नेवारी), (काठमाडौंः माहिली बज्राचार्यः २०६१ ), पृ.  ।

यो विधि सकिएपछि कन्याको बुबाले हात समाउन लगाई अग्नि प्रदाक्षित गराई कन्या संकल्प गराइन्छ। इहि संकल्प सकिएपछि अघि कन्याको हातमा पोको पार्न लगाई दिएको सामान सलापाना राख्न लगाई बाँधेको हात खोलिदिने काम हुन्छ। यसपछि इहिको विधि पूरा हुन्छ।

**इहि गर्दा प्रयोग हुने विशेष सामग्री र त्यसको अर्थ:**

**शतवेदिका :** पहेंलो काँचो धागो, यसलाई इहि कन्याको उचाइ (एक सय पल्ट) नापी यसमा दश थरीको विभिन्न सामग्रीहरू झुण्ड्याई कन्यालाई लगाउन लगाइन्छ। शतभेदिकाद्वारा कन्याको उचाइको नाप लिनुको अर्थ "तिमी यति उचाईको हुँदा संकल्प गरेको" भन्ने चिन्ह हो। भने यसमा विभिन्न दशवटा सामग्रीहरू झुण्डाउनुको अर्थ हो उक्त कन्याको विवाह नहुन्जेल रक्षा गरोस् भन्ने भावना राखिन्छ। यसमा झुण्ड्याइएको दशवटा सामग्रीहरूको भिन्दा भिन्दै महत्व र गुण भएको औषधीमूलक चिजविजहरू हो।

**शतवेदिका झुण्ड्याइने दश प्रकारको सामग्रीहरू**

- अदुवा
- मदनफल
- चाकू
- मिकुसिं
- शोभायफव:
- न्याँ (सुकोको माछा)
- ग्वय (सुपाडी)८. चि (नून)
- ताय् (लावा)
- आखे

**२. वेलफल :** विशेष औषधिमूलक गुण भएको फल हो। यो फल चाँडो नबिग्रने र किराले पनि नखाने हुन्छ। पाकेको बेलको रस गर्मीमा शितलता प्राप्त गर्नको लागि गुणकारी मानिन्छ।

**३. सलापा :** माटोको विशेष प्रकारको भाँडो, यो इहिको लागि विशेष रूपमा प्रयोग हुन्छ। यसमा अष्टमंगल सूचक चिन्हहरू बनाइएको हुन्छ।

**४. इहि पटासी :** विशेष प्रकारको बस्त्र जसलाई इहिमा दिव्य बस्त्रको रूपमा प्रयोग गरिन्छ। यसमा रातो र पहेंलो रङ्गको धर्साहरू बनाइएको हुन्छ। कसै कसैले यसलाई रजस्वला हुने समयको संकेत पनि मानेको देखिन्छ। इहिमा यो बस्त्र दिनको अर्थ छोरी ठूलो हुने अवस्थामा रहेको हुँदा संयमित हुनुपर्ने ज्ञानको रूपमा यो बस्त्र लगाउन दिएको मानिन्छ।

**५. मोकि :** अष्टमंगल सूचक चिन्ह बनाएको कागजको टुक्रा जुन इहि कन्याको निधारमा लगाउन लगाइन्छ। यसरी निधारमा अष्टमंगल भएको मोकि लगाइदिनको अर्थ उक्त कन्याको भाग्यलाई सधैं अष्टमंगलले साथ देओस भन्ने भावना हो।

**शतवेदिकामा झुण्ड्याइएको सामग्रीहरूको गुण वर्णन :**

**१. चिः** *लवण : गोधनो रूच्य : पाचन : कफ पित्तद : ।*
*पुंस्त्व वातहर : काये शैथिल्य मृदुताकर ॥*

नून शरिरको लागि अति आवशयक तत्व हो जसले खान रूचाउने, र खाना पचाउने काम गर्छ भने वाथ रोग, नपुंसकता निको पार्छ ।

**२. पालु :** *भाजनाग्रे सदा पथ्यं लवणार्द्धक भक्षणम् ।*
*अग्नि सन्दीपनं रूच्य जिह्वा कण्ठ शोधनम् ॥*

अदुवा पनि एक प्रकारको औषधीयुक्त गुण भएको वस्तु हो जसले खाना रूचाउने, शरीरमा चिसो लागेमा गर्मी प्रदान गर्छ भने खोकी निको पार्ने आदी काम गर्छ ।

**३. ग्वय :** *पुंग गुरू हिमं रूक्षं कषायं कफ पित्त तुनम् ।*
*मोहनं. यीपर्न रूच्चनास्य पैरस्य नाशनम् ॥*

सुपाडीले शितलता दिन्छ, खोकी, नाश गर्छ । पाचनशक्ति बढाउँछ । खाना रूचाउने आदि ।

**४. ग्वा :** पानले रूचि बढाउने, रक्त पित्तकारक, खोकी आदी रोगबाट बचाउँछ । मुखको दुर्गन्ध नाश गर्छ । अल्छिपन हटाउने आदि ।

**५. मिकुसिं :** यो बेसार जस्तै पहेंलो हुन्छ । यसमा श्रीखण्डमा हुने गुण जस्तै गुण हुन्छ । सुगन्धित र शीतल हुन्छ ।

**६. मदन फल :** यो तितो हुन्छ । बीर्य बढाउने काम गर्छ । गरम प्रभावशाली, लेखन राम्रो हुन्छ । विष, बिकार नाश गर्छ । कृष्ठरोरा निको पार्ने काम गर्छ । बेह्रोश हुने रोगलाई निको पार्छ आदि ।

**७. शोभायफल :** यसले तेज स्मरणशक्ति बढाउँछ भने बाथरोग निको पार्ने पनि काम गर्छ । आँखाको रोग आदि रोगलाई निको पार्ने काम गर्छ ।

**४.३ हिन्दु धर्मावलम्वीहरुले गर्ने इहि विधि**

शुरूको दिनलाई दूस्व (पूर्वाङ्ग) र दोस्रो दिन इहिको संस्कार गरिन्छ । पहिलो दिनमा छोरीलाई विहानै सबेरै नुहाई धुवाई निंसिं गरिन्छ । घरमा पनि निंसिं गरी चोखो पारिन्छ । छोरीलाई राम्रो कपडा, गहना लगाईदिई सजाइन्छ ।

इहि गरिने स्थानबाट 'पिथपूजा' गर्न पठाइन्छ । यस पूजाको लागि आवश्यक पूजा सामग्री लागयत चतांमरी (चामलको पिठोबाटी बनाइएको रोटी), ख्यँसगंज्वलंत (अन्डा, वः) मास पिंधेर बनाएको रोटी, माछा, छ्वेला (मासु उसिनेर बनाएको परिकार) राखि पूजा पठाइन्छ । घरको थकालिं (मूल व्यक्ति) ले वयलिं सराद्ध गरेपछि पितृलाई सन्तुष्टि प्रदान गरेको

मानिन्छ नेवार संस्कारमा पितृदेवताको आव्हान नगरी अन्य कुनै पूजा परमपराको थालनी नगर्ने प्रथा छ । यसपछि ढुस्वः दिनको मूल पूजा शुरू गरिन्छ ।

पुरोहितले कलश स्थापना गरि हाम्रो परिवाका देवताहरू सूर्य नारायण सदशिव, गृहलक्ष्मी, कुलदेवता, बरूण देवता, नाग देवताको प्रतिकात्मक रूपमा स्थापना गरिन्छ । इनाय द्यः (गणश देवता), आगंध (कुल देवता), क्षेत्रपाल लगायत अरूहरू आवश्यक देवता स्थापना गरिन्छ । यसपछि पातको टुक्रा विछ्याई त्यसमा चिउरा, धान, अक्षेता अलि अलि राखि पूजा गरिन्छ र सँगै सलाःपा (विशेष प्रकारको माटोको भाँडो) मा कुम्हःका राखिएको हुन्छ ।

ज्योना लप्तेमा चाकू, अदूवा, सन्या (सुकेको माछा) गेडा सुपाडी, लावा, मदनफल राखि पूजा गरिन्छ । यसपछि इहि गर्न लागेको छोरीलाई साँचो (पुरानो साँचो) थकाली नकिले समाउन दिई, पानी धारा खसाल्दै लसकुस (स्वागत गरी भित्राउने) गरी देवताको अगाडी पूर्व दिशातर्फ फर्काएर बसाइन्छ । यसपछि सलीं (माटोको सानो भाँडो) मा आगो बनाइ त्यसमा इकापका (रायो र सरस्यू) राखी धुवाँ बनाइन्छ त्यसमा एउटा बत्ती पनि राखिन्छ । त्यो भाँडोलाई घरको मूल ढोका बाहिर राख्न लगिन्छ यसो गर्नुको अर्थ घरमा रहेका नराम्रा आत्मालाई पन्छाउनु हो । यसपछि छोरीलाई कलश र अरू देवता पूजा गर्न लगाइन्छ । यसपछि थकाली नकीले पूजा थालीमा दही (धौपति) राखि टिका बनाएर कलशलाई र घरको देवता भनि धुरी पूजा गर्न लगाइन्छ । छोरीलाई दहि अक्षेताको टिका, फूल लगाइदिन्छ । यसपछि दुस्वःका (शतवेदिका) को काम हुन्छ ।

इहि बच्चालाई उभिन लगाइन्छ, खुट्टाले एक टुक्रा बाँसको लट्ठी अड्काउन लगाउँछ, अर्को एक टुक्रा बाँसको लट्ठी एकजना मान्छेद्वारा समाउन लगाई टाउकोमा राखिन्छ, त्यसपछि थकालीले टाउको देखि खुट्टा, खुट्टादेखि टाउको गरि एकसय आठ चोटी बेर्ही दूस्वःका कोखा बनाउछ । यस दूस्वःका कोखा (पहिलो दिनको प्रवेशको माला) मा ज्योना लप्तेमा सात थरी बस्तु अर्थात शतवेदीका बेसारको टुक्रा, चाकु अन्य सामग्री राखि पोको पारी झुन्डाइन्छ र यो क्वखा (माला) बच्चालाई लगाउन दिए पछि फेरी थाकुलि नकींले कलश र अरू देवता पूजा गरी दक्षिणा चढाउन लगाईन्छ र अरूहरू दक्षिणा दिनुपर्नेलाई पनि टिका लगाई दक्षिणा दिई पुष्पाञ्जली समाप्त गरि कलशको जल, टिका, फूल सबैले लगाउछन् । यसपछि नकींले सिन्हःमू लिएर त्यसको टिका आफूले पहिले लगाउछ र अरू सधुवा आइमाइहरूलाई पनि लगाउन दिइन्छ । यसपछि ज्वलान्हाय्कँ लिई आफूले पनि हेरि अरूलाई पनि हेर्न लगाइन्छ । यसपछि काठको पाथीमा फूल, चामल, फलफूलका टुक्राहरू राखी बच्चालाई अभिषेक गरिन्छ । सबै आफन्तहरूले ताय (लावा) र अबीरले पूजा गरी शुभकामना दिइन्छ । यसपछि थकाली नकीले फेरी साँचो समाउन दिएर पानी धारा खसाल्दै, लसकुस गरी थाय्भु (हेर्नुस चित्र फलक नं. १३) (काँसको थालमा विभिन्न विधिपूर्वक बनाइएको खानेकुरा राखिएको थाल) खुवाउने ठाउँमा बसाइन्छ । यसरी थायभु खुवाउन लाग्ने क्रममा बाटोमा सिलौटामा राखिएको गेडा मास खुट्टाले पिसेको जस्तो गरी खुट्टाले पिस्न लगाइन्छ र सलिं फुटाउन लगाइन्छ । यसपछि थायभु खुवाउने ठाउँमा बसाई पिथ पूजाको टिका फूल दिएर, लगाइराखेको दूस्वः कोखा खोल्न लागाई सलापामा राखि, राख्नु पर्ने ठाउँमा

राख्न लागिन्छ । थायभु खुवाउने ठाउँमा आई सूर्य देवतालाई बत्ती चढाई बच्चालाई पूजा गर्न लगाउँछ । थाय्भुको अगाडी पातको टुक्रा राखि त्यसमा थाय्भुको अलि अलि खानेकुरा राख्न लगाई, जल चढाउन लगाई सकेपछि थाय्भूको वरिपरी जलले घुमाई थाय्भुको खाना खान लगाइन्छ । थाय्भुको खाना खुवाउँदा कसैले पनि छुन हुँदैन । खान सकिएपछि चुठ्न लगाइन्छ र *'कलंब्वय्'* (जुठो फाल्ने) एउटा बत्ती बच्चालाई पूजा गर्न लगाई जुठोमा नै राखि *'कलंब्वय्'* अथवा द्वारमा राख्न पढाईन्छ । यति काम सकिएपछि दूस्वः दिनको पूजा समाप्त हुन्छ ।

यसको दोस्रो दिन भोलीपल्ट नुहाएर चोखो भएर आवश्यक सामग्री तयार गर्दछ । त्यसपछि थकाली नकीले अलिद्य र इनायद्यः भित्राउने कार्य गर्दछ । अलिध भनि माटोको डल्लोलाई पर्वत जस्तो आकारमा बनाएर त्यसभित्र सानो गोलो सुपाडी, अक्षता, पैसा राखी बनाएको हुन्छ । त्यसमा कणीपाता पञ्चपाता, अलावा र चाँदीको दृष्टि तिनवटा बनाएर राखेको हुन्छ ।

इनायद्यः भनेर कलशमा रातो कपडाले बेह्री त्यसमा तीन तहको छत्र राखेर बनाइएको हुन्छ । (हेर्नुस चित्र फलक नं. ९) अलिध र इनायध यसरी बनाइसकेपछि ढोका बाहिर एकजना मान्छेलाई समाउन दिइ राख्छ र नकीले चोखो पानी छरेर सानो माटोको भाँडोमा ईकापका लाई राखी बालेर त्यसको धुवाँ बनाउँछ । अक्षता, अबिर र दहि मिसाएर बनाएको टिका देवतालाई लगाई, फूल चढाई, फलफूल टुक्रा पारेर राखेको पाथीद्वारा अभिशेक गर्ने कार्य गरीसके लशकुश (स्वागत) गरी जग्यशला बनाई राखेको ठाउँमा पूर्वतिर राखिन्छ । यसैको बिचमा अर्को एउटा कलश पनि स्थापना गरी धौपति (दहि सगुनको भाँडो) र अरू देवता क्षेत्रपाल आदिसँगै सिन्दुरदानी र आरसी पनि राखिन्छ । पूजा गर्ने ठाउँको पछाडी फूफूलाई नङ्ग थाप्नको लागि चाहिने कँयभु (काँसको थाल) र नौनि (नङ्ग काटिदिने आइमाई) दिने कँय्ख्वलाचा (काँसको कचौरा), नौनीसँग भएको नङ्ग काट्ने छलंचा पनि राखि पूजा गर्न राखिन्छ । यसरी सम्पूर्ण सामग्री पूजाको लागि सजाएर राखि सकेपछि अघिल्लो दिनमा जस्तै नकिले पानी हाल्दै लशकुश गरी इकापकाको धुवाँ बनाइ सकेपछि नकिले धौपती लिई टिका बनाई सबै देवतालाई पूजा गर्न लगाई आफुले पनि टिका लगाई इहि बच्चालाई पनि टिका लगाइदिन्छ । फूल लगाई दिन्छ । त्यसपछि भालिंचा तेल राख्ने भाँडोमा तेल अलिकति, मासू एक टुक्रा, पैसा, राखि दूबोको मुट्ठाबाट तेल लिई बच्चालाई लगाइदिन्छ र भालिंचा बच्चाकै हातमा राखिदिन्छ । यसपछि फुफुको हातमा फूल र चामल दिई नङ्ग थाप्ने थालमा फुफुलाई दिने लुगा राखेर फूफूलाई दिन्छ त्यस्तै नौनिलाई पनि फूल चामल हातमा दिई नङ्ग काट्ने अलं (रातो रंग) र *कँय्ख्वला* (काँसको कचौरा) दिइन्छ ।

यसपछि बच्चालाई नङ्ग काट्ने नौनीको अगाडी लगिन्छ । नौनीले नङ्ग काट्छ (हेर्नुस् चित्र फलक नं. १०) फूफूले काँसको थालमा नङ्ग थाप्छ । यो नङ्गलाई जाहाँ पायो त्यहि फाल्नु हुँदैन नदीमा नै फाल्नुपर्छ भनिन्छ । यो काम सकिएपछि बच्चालाई फेरी नुहाई दिई पूजागर्ने स्थानमा देवताको अगाडी बसाइन्छ । फेरी इकापका बालेर धुवा बनाएर चोखाउने र पूजा गर्न लगाइन्छ । त्यसपछि नकिंले टीकाको बट्टा *(सिन्हःबत्ता)* बाट *भुयुसिन्ह* (सिन्दुर) देब्रे हातले लिई देवतालाई लगाईदिन्छ र आफूले पनि लगाउँछ । यसपछि अर्को एकजना मान्छेको सहायताले रातो कपडाले बच्चाको आँखा छोप्न लगाई नकिंले देब्रे हातले *भुयुसिन्ह* लिई बच्चाको सिउदोमा तीन पटक

लगाउन दिन्छ । यसपछि रातो कपडा र टीकाको बट्ट *(सिन्हःबत्ता)* बच्चाको हातमा राखिदिन्छ । यसविधिलाई सिन्दूरारोहण (हेर्नुस् चित्र फलक नं. १४) भन्ने गरिन्छ । यसपछि दहि, अक्षता अबिरको मिश्रण टीका बच्चालाई लगाइदिन्छ र *इहिपर्सि* (इहि धोती) बच्चालाई दिन्छ र दुस्वःका लगाउन दिई सलापा अगाडी राख्न दिई बाह्र छुइगु गरिन्छ । यसपछि अलिंधलाई *'बाह्रां छुइगु'* गर्नु भनेको धान, चामल पैसा, अबिरको मिश्रण इहि गरेको कन्याको हातमा तीन चोटी दिई लुगा, कपडा दिनु हो । पूजा गर्न लगाई बच्चालाई फलफूल टुक्रा राखेको पाथीबाट तीनचोटी *'लुकी'* (अभिषेक) गरीसके पछि सबैले अबिर फूल लावाले पूजा गरि *थाय्भु* खुवाउन लगिन्छ *थायभु* खुवाउन लग्दा बाटोमा फेरी खुट्टाले मास पिस्न लगाइन्छ । यस बेलामा *थायभूमा ताय* (लावा), *धौ* (दहि), *मरि* (रोटी, मिठाई), *दुरू* (दुध) राखिन्छ । बच्चालाई खुवाउनु अघि सूर्यदेवतालाई पनि दहि अलिकति र मिठाई एकटुक्रा राखि त्यसमा बत्ती राखी, बच्चालाई पूजा गर्न लगाई घाम आउने ठाउँमा राख्न लगिन्छ । यसपछि दुस्व का खोल्न लगाई *थायभु* खान लगाइन्छ । खान सकिएपछि एउटा बाटा (भाडा) मा मुख चुठ्न लगाई त्यसमा *कलंब्वय* राखी, बत्ती राखी बच्चालाई पूजा गर्न लगाई *कलं* फ्याक्न पठाइन्छ ।

पुरोहितले यज्ञ शुरु गरी त्यहाँ गर्नुपर्ने सम्पूर्ण पूजा सकिएपछि फेरी *थायभु* खुवाएको ठाउँबाट बच्चालाई लसकुस गरी विधि पूर्वक ल्याई *दूस्व* का लगाउन दिइन्छ । यसपछि कन्यादानको विधि शुरू हुन्छ । बच्चाको बुबाले आफ्नो छोरीलाई काखमा राख्छ । अगाडी तामाको थालीमा बेल *(ब्याः)* एउटा, बुकी सुन (कुनै बुट्टा नकुदिएको) को टुक्रा राखी त्यसलाई आफ्नो कुल देवता सम्झी त्यसलाई विधिपूर्वक पूजा गर्न लगाइन्छ । पूजा गराई सकेपछि हातमा जौ, तिल, कुश लिइन्छ । आमाले पानी र दुधको धारा राख्दै बच्चाको बुढीऔला समाती अगाडी भएको बेल र काँचो सुनको टुक्रा भएको तामाको थालीमा छुवाइन्छ । त्यसपछि बुबाले बच्चालाई काखबाट भुइमा राख्छ । यसै विधिलाई कन्यादान भनिन्छ । यो विधि गर्ने समयमा यस मन्त्र पढिन्छ *"अद्येत्यादि संकीर्त्यामुको हंम मास्याः कन्यायाः जनषिकुर ग्रह जनित वैधव्यदोष परिहारार्थ सौभाग्याप्तये इमाममुकी नाम्नी कन्या विष्णुवेतभ्यं समर्पयामि ।"* (अन्तर्वार्ताको क्रममा बलदेव जुजुले भन्नु भएको) यो विधि सकिएपछि श्रद्धाले दक्षिणा तामाको थालीमा चढाइन्छ । यसपछि कन्याको दुबै हातले बेल समाउन दिई पुरोहितले *सःखि खिप* ले छोरीको हात बाँधिदिन्छ । यसरी हात बाँधेर नै मण्डप घुमाइन्छ र फेरी त्यही ठाउँमा बस्न लगाई बाँधेको हात खोलिदिन्छ । फेरी अगाडी *सलापा* राखी *बाह्रं छुइगु* गरिन्छ । यसपछि नकिंले पूजा गर्नुपर्ने देवताहरू पूजा गरी, दक्षिणा चढाउन लगाई सबैलाई टिका लगाइदिई दक्षिणा दिई सबैजनालाई पूजा, होमगर्न लगाई पूजा विधि सम्पन्न गरिन्छ । यसपछि कलशको जल लिने कार्यक्रम हुन्छ । *सिन्ह मूं ज्वलंन्हायक* देखाउने कार्य गरी कार्य सम्पन्न गरिन्छ ।

इहि गरिसकेको सोही वर्षमा देवाली पुजा (कुल देवताको पुजा) को दिनमा आफ्नो कुल देवताकहा इहि गर्दा दिइएको दुश्वकाः र सलापा चढाइन्छ । (हेर्नुस चित्र फलक नं. २२)

## पाँचौ अध्याय

### ५.१ इहि पुजा ज्वलं (सरसामानहरू)

इहि गर्दा चाहिने सरसामानहरु

**(क) कुम्हाः ज्वलं**

तःग्वःगु कलश-३, अयलिं-१, नागपं-१,गं कलश,-३६, इहि सलाःपाः-आवश्यकता अनुसार, सलिं-आवश्यकता अनुसार

**(ख) कापः ज्वलं**

- तूल, कापः (छत्र, कलश गा व कसाःगा -३ मिटर
- तुयुगु कापः (छत्र ३६ व ओसाखाली) -२ मिटर

**(ग) चित्रकारी ज्वलं**

- अष्ट मंगल ज्वः-१
- फयगं ज्वः -१
- म्वःकी -माक्व (आवश्यकता अनुसार)
- चा भाराय् च्वयेगु -माक्व

**(घ) ल्वहंकःमि ज्वलं**

- माय् केलेगु लोम्हा
- ल्वहंमा ज्वः -१

**(ङ) बसजा ज्वलं**

- तसला -१
- पन्यू -१

**(च) बन्हे ज्वलं**

आरुवा-८९, पंचरत्न, लुँ सिन्हः -५ पता, लुँ पले, वह पले, पुजा अंगू (वहयागु), कलश वास, लुँ छलं, वह छलं

**(छ) बन्या ज्वलं**

जता नैंक्याः मिकुसिं, मदन फल, शोभाय फ्वः, नस्वाः, सोभाय्फल, सितांसी, कपू -माक्व, लवँ, म्हः सिन्हः, म्हासु सिन्हः, अबीर, पुजासिन्हः -माक्व

**(ज) गथु ज्वलं**

वंगलसिमा ह, पय्पला, बछ्ाः कचा, चिकंधला स्वाँ, दाफ्वः स्वाँ, सितु ।

**(झ) पसः ज्वलं**

घ्यो, कस्ति , सादुरू, साखः वा चिनि, चाकु, चि, बजि, जाकि, खालि ग्वाः पाः, किसलिं ग्वय् ग्वः, सःखि, चिके, ज्यःनां लप्ते, चप्पा (ग्वःजायात, माय्, इका, पःका, तुख्वः, मरि, खाजा, पालु, न्या, ब्वयाः, इहि पर्सि, पंच पकवान मरि, धौ, ग्वय्का (माःसा जक)-माक्व ।

**(ञ) छें ज्वरे यायेगु ज्वलें**

कुम्हःका, पंचपता, कर्ण पका, दों, ताय्, आखे, पसूका, तिं कथि, कवं, जजंका , इताः, आलु इताः, होम यायेत सिं (३२ का) मेगु, सउ (गोबर), प्वताय् , कूस, तयतकि जाकि, आलु चक्कि (चाःचाःगु) -माक्व, ३२ ता बीबः जवलं, जोज्ञ यायेगु ज्वलं ।[४३]

**सब्जंब्व (थाय्भू) खुवाउने वेलामा चाहिने सामग्रीहरू**

ज्योनां लप्ते, बजि, खय्पि चय्पिं, मुस्या, पालु, वाउँचा, वः, भुति, कय्गू, पःमाय्, सिमपु, चिम्हुकं ला- कवाफ, ग्वः, गुलि, सें, स्वँ, ताला, हिंला, पंला, लाव, लापि

पंचपकौरी

*(क) मेय्छ्यों*

*(ख) सतफला*

*(ग) चाकलाः*

*(घ) प्यकुंलाः*

*(ङ) स्वकुंलाः*

पंच पकौग्वारा

*(क) ताय्ग्वारा*

*(ख) खतिग्वारा (खत्याग्वारा)*

*(ग) लत्याग्वारा*

*(घ) हाम्वःग्वारा*

*(ङ) कःनिग्वारा*

खें, न्या, ग्वाः, म्वःसिप्वः, चाकुमरी, याकःभतु (बिया छ्वये बलय्), ज्वः भतु (ब्याहा याये बलय्), ह्याउँथ्वँ, भौथवँ, अय्लाः, दुरु ।[४४]

---

[४३] संयोजक - देबेन्द्र बजाचार्य, ब्रम्हत्वाः, यें ।

[४४] संयोजक - रामकृष्ण महर्जन, तःननी, ब्रम्हत्वाः, यें ।

# छैठो अध्याय
# उपसंहार

## ६.१ इहिको सामाजिक तथा सांस्कृतिक प्रभाव

इहिलाई 'कर्म खंकेगु' संस्कारको रूपमा गर्ने गरेको पाइन्छ। इहि गुर्नपर्ने नेवार जातीहरूले जुनसुकै अवस्थामा पनि इहि गर्ने गरेको र विदेशमा भएको अवस्थामा पनि इहिकै लागि भएपनि नेपाल आउने गरेको पनि देखिन्छ।

इहि छोरीको मंगल कामनामा गरिने भएपनि वास्तवमा यसले पारेको राम्रो र नराम्रो प्रभाव केही देखिदैन। ठूलाबडाको निर्देशनमा इहि सबैले गर्ने गरेको देखिन्छ।

इहिको मुख्य उद्देश्य वैधव्य दोष निवारण गर्नु भएपनि व्यवहारमा लागू भएको देखिदैन। नेवार समाजमा विधवाले बर्षदिन मात्र सेतो वस्त्रको प्रयोग गरेको पाइन्छ। पछि रङ्गको प्रयोगमा कुनै छेकवार नभए पनि विधवा विवाह, स्वतन्त्रताको कुराहरूमा समाज मौन नै देखिन्छ।

नेवार केटीहरूको विभिन्न संस्कार अन्तर्गत देवतासँग तीन पटक विवाह भएको भनिए पनि मानिससँगको विवाह पश्चात यदि उसको लोग्नेको मृत्यु भएपछि उसलाई विधवा नै भनिन्छ र उसले विधवाको नै जीवन बिताएको देखिन्छ।

इहिको मान्यता अनुसार इहि गरिसकेपछि छोरीलाई ठूलो भएको मान्ने, उसको जुठो (चिपनिप) बार्ने कुरा, जन्म र मृत्युमा वार्नु पर्ने जूठो पूर्ण रूपले अपनाएको देखिन्छ। त्यस्तै गरी इहि गरिसकेको बालिकाको मृत्यु भयो भने उसको अन्त्यष्ठि संस्कार ठूलो व्यक्तिको जस्तै गरी गर्ने गरेको पाइन्छ।

इहिमा वेलफलसँग विवाह गरिदिने चलन छ र कन्याको भावि पति उसले पाउने वेलको स्वरूप अनुसारको पाउँछ भन्ने मान्यता छ। यसरी इहिको मुख्य उद्देश्यलाई समाजले नअपनाएर केही कुराहरूलाई मात्र अपनाएको देखिन्छ।

आजको व्यस्त, आधुनिक समाजमा इहि संस्कार समाज घरपरिबारको कारणले सबैले गर्ने गरेपनि इहिको उद्देश्यहरू व्यवहारमा लागु हुन सकेको देखिदैन।

## ६.२ वर्तमान समयमा इहिलाई कसरी हेर्ने ?

हिन्दु र बौद्ध दुवै समाजमा इहि गरिन्छ। यी दुवै समाजमा इहि गर्दा सामान्य पूजा विधिहरू फरक भए पनि विशेष पूजाहरूमा उस्तै उस्तै किसिमको सामग्रीको प्रयोग गरिन्छ। इहि गर्ने तरिका फरक फरक भए पनि अभिप्राय भने एउटै हुन्छ।

इहि गरिने कन्याको उमेर न त उ बालिका नै हुन्छ न त तरूणी नै । यो उमेरमा उसमा थोरै मात्रामा बालापन पनि रहेको हुन्छ भने केही मात्राको उसको स्वभावमा लज्जापन, गर्न हुने, गर्न नहुने कुराको थोरै थोरै मात्रामा बुझ्ने क्षमता विकास भईसकेको हुन्छ । यस उमेरमा केही सिक्ने र बुझ्ने भैसकेको हुने हुनाले उसलाई अब तिमी ठूलो भयौ भन्ने भावनामा इहिपर्सी लगाउन दिइन्छ भने सिउँदोमा सिन्दूर लगाई लिएर आफ्नो आगक्ष्य (कुल देवताको घर) मा प्रवेश गराइ संरक्षणको लागि कुल देवतालाई सुम्पिन्छ । यस्तो गर्नु पर्छ यस्तो गर्न हुँदैन भनी केही जिम्मेवारी बोध गराइन्छ ।

इहिलाई बेल विवाह भन्ने चलन भए तापनि इहि गर्दा उच्चारण गरिने पाठहरूमा कतै विवाहको प्रसंगमा जोडिएको देखिदैन ।

अबोध अवस्थाको केही विकसित अवस्थामा हुँदा नै इहि गरिन्छ यस्तो अवस्थामा नै इहिमा बेलसँग विवाह, सुवर्ण कुमारसँग गरिदिएको विवाह आदि इत्यादी भनी यस्ता शब्दहरू प्रयोग गर्दा बालिकाको मनमा उसको जीवनमा विवाह, लोग्नेको महत्व धेरै छ भन्ने कुरा बुझ्न सक्छ । आजको युगमा नारी पुरूष समान रूपमा अगाडि बढ्ने युग हो । केटीलाई मात्र विवाह शब्दको प्रयोग गरि कन्यादान गरिदिनु पर्ने, अर्काको घरमा जानु पर्ने उसलाई जीवनमा जीउन लोग्ने नै चाहिने जस्तो गरी विधवा हुन बचाउन इहि गर्नु आजको युगलाई पटक्कै नसुहाउँदो कुरा देखिन्छ । केटी मान्छेको मनोवल टुटाउने उसको जीवनको मूल आधार नै विवाह र लोग्ने हो यसबाट टाढा हुन सक्दैन भन्ने जस्तो गरी सानै उमेरमा लोग्ने र विवाह शब्दसँग परिचित गराउन खोज्नुलाई अवश्य पनि राम्रो मान्न सकिदैन । समान अधिकार र समान व्यवहारको अपेक्षा राख्ने आजको युगमा छोरीलाई कन्यादान दिनु त्यति समय सुहाउदो नभएको देखिन्छ । छोरी छोरा भन्दा कुनै कुरामा पछाडि, तल्लो स्तरमा त छँदै छैन भने 'संस्कार' जस्तो आफ्नो जाती समाजको पहिचानको रूपमा पनि छोरीलाई नै हेला गर्ने किसिमबाट इहिलाई विवाहको नाम दिनु हुँदैन जस्तो लाग्छ ।

यदि इहिलाई विवाह नै मान्ने हो भने कुनै पनि केटीको विवाह हुनु भनेको आफ्नो गोत्रबाट अर्कोको गोत्रमा जानु हो । इहि विवाह भए इहि गरिसकेपछि कन्याको गोत्र परिवर्तन भएको खोइ त ? विवाह भइसकेपछि जन्म घरको सूतक वा अरू जुठो चोखो चार दिन वा पाँच दिन मात्र बारे पुग्ने हुन्छ । तर इहि गरि सकेको भए पनि कन्याले सबै बार्नु पर्छ भने यसलाई कसरी विवाह मान्न सकिन्छ ?

हाम्रो समाजमा विवाह छोराको लागि मात्र नभई छोराछोरी दुवैलाई अनिवार्य मानिन्छ । अहिले पनि हामीले संस्कारको नाममा इहि गरी आफ्नो छोरी चेलीलाई दान शब्द प्रयोग गरी दान दिनु एउटा फललाई लोग्ने भन्नु कतिको अर्थपूर्ण हुन्छ त्यो हामीले सोच्नु पर्ने भएको छ जस्तो देखिन्छ ।

सानै उमेर देखि पढ्ने र अरू सिर्जनशील कामको महत्व र त्यसप्रति उत्साहि हुन सिकाउनको सट्टामा लोग्ने, विवाह घरको काम सिकाउने भनी संस्कारको नाममा विवाह गरी दिएको भनी बच्चा खेलेको झैं गर्नु समयको माग अनुरूप नभएको हो की जस्तो देखिन्छ ।

हिन्दु समाज होस् वा बौद्ध समाज दुवैले मिलेर इहिका केही विधिहरूमा सुधार ल्याउनु पर्छ । जस्तै कन्यादान जस्तो देखिन्छ । संरक्षित, संयमित, छोरीले मात्र होइन छोराले पनि हुनु पर्छ । छोरीको जिम्मेवारी जति हुन्छ छोराको पनि त्यतिकै हुन्छ । एउटा सानो बालिकालाई दुहलीको रूपमा सजाएर एउटा सुनको टुक्रा र फल अगाडि राखी त्यससँग विवाह भएको भन्नु भन्दा जीवन अगाडी बढाउन आवश्यक ज्ञानको मार्गमा हिड्न सिकाउने कर्मलाई संस्कार बनाउनु पर्छ जस्तो लाग्छ ।

इहि गरेपछि विधवा भई वैधत्य जीवन विताउन नपर्ने भनिएता पनि व्यवहारिक रूपमा त्यस्तो हुँदैन । कुनै केटीको लोग्ने मऱ्यो भने विधवा मात्र हुनु पर्ने होइन की पहिले पहिले त मरेको लोग्नेको चितामा आफू पनि जिउँदै जल्नु पर्ने यदि सती गएन भने पनि जीवन भर लोग्नेकै नाममा पतिब्रता स्त्री भएर धर्ममा बस्नु पर्ने नबसेमा समाजले अनेक लान्छाना लगाएर टिक्न दिदैन थियो । आज भोली सतीप्रथा नभए पनि विधवालाई रङ्गिन लुगाको प्रयोगमा कुनै छेकवार नभए पनि अरू विभिन्न नियममा बसेको देखिन्छ ।

इहिको मूल मान्यता वैधव्य जीवनबाट महिलालाई मुक्त गर्नु हो भने नेवार समाज लगायत यदि नेपालको सबै समाजमा यसका मान्यतालाई लागू गर्न सकेमा यसले ठूलो क्रान्ती ल्याउन सक्नेछ । अहिले चलिराखेको महिला अधिकारको कुराहरूमा विधवाले रातो वस्त्रको प्रयोग गर्न पाउनु पर्छ भन्ने जस्तो विषयमा थप टेवा पुग्न सक्नेछ । यसको उद्देश्यलाई आत्मसाथ गरी व्यवहारमा लागू गर्न सकेमा महिला विवेधको रूपमा रहेको केही पक्षहरूलाई हटाउन सकिन्छ कि जस्तो देखिन्छ ।

### ६.३ इहिमा गरिनु पर्ने परिवर्तन

आजको युग परिवर्तनशील छ यहाँ बाच्नका लागि हरेक मानिसले संघर्षशील भएर जीवनमा आएका चुनौतीहरूको सामना गर्नसक्नु पर्छ । छोरा होस् वा छोरी दुवैलाई समान रूपमा अगाडी बढ्न सक्ने ज्ञानको आवश्यकता छ ।

हामीले गर्दै आएको हाम्रो हरेक संस्कार समयको माग र आवश्यकता अनुसारका बनेका थिए । तात्कालीन समयमा त्यस्ता संस्कारहरू सम्पन्न गर्दा विभिन्न उद्देश्यहरू पूर्ण भएता पनि अहिलेको समयमा कतिपय पक्षहरू असान्दर्भिक जस्तो देखिन्छ । हाम्रा संस्कारलाई हामीले मान्नु पर्छ यदि समय सुहाउँदो छ भने । होइन भने हाम्रा पूर्वजहरूले चलाएको संस्कृती, संस्कार, रीतिथिती आदिलाई जुनसुकै हालतमा पनि सम्पन्न गर्नुपर्छ भनी त्यसको पछि लागेमा भने त्यो अन्धविश्वासपूर्ण सोच हुन जान्छ । परम्परालाई बचाउनु पर्छ भन्ने सोचमा समयसंग अमिल्दो संस्कारलाई पनि मान्दै जानु अव्यवहारिक हुन जानेछ ।

मातृसत्तात्मक समाज भए पनि पितृसत्तात्मक समाज भए पनि बस्ने दुईथरी मानव स्त्री र पुरूषबाट नै संसारअगाडी बढ्छ । दुवैको समान सहभागितामा मात्र हरेक काम सम्पन्न हुनसक्छ भने यहाँको ठूलो र कसको महत्व बढी भन्ने प्रश्न नै उठ्दैन । हामीले गर्ने हरेक कार्यम समान भावको सोच राख्न सक्नु पर्दछ ।

हाम्रा संस्कारहरू तात्कालिन समयमा जुन परिस्थितिमा छोरा र छोरी मानिसको लागि छुट्टा छुट्टै बनाएको भएता पनि त्यसलाई छोरा र छोरीको शारीरिक परिवर्तनको भिन्नता अनुसार गरिने विधिलाई हामीले स्वीकानु पर्छ तर दुवैमा लागु हुन सक्ने विषय वस्तुबाट छोरा र छोरीमा भिन्नता वा भेदभाव देखाउने किसिमको शब्दको प्रयोग, विधिको प्रयोगलाई त्याग्नु पर्छ । कुनै पनि काम छोराको लागि वा छोरीको लागि भनि भेदभाव गर्नु हुँदैन । कुनै पनि काम दुबैले गर्न सक्छ ।

इहिको उत्पत्ति भएको समयमा जुन धारणाबाट इहिमा कन्यादन गरिने विधि राखे पनि आजको युगमा छोरीलाई दान दिने वस्तु हो भनि देखाउन खोज्ने विधीलाई हटाउनु पर्छ जस्तो लाग्दछ ।

हाम्रो संस्कार र धर्मले दिएको मान्यता अनुसार सिन्दूर, चुरा, पोते आदि लगाउनु सधुवाको चिन्ह हो भनि छोरी मानिसको जीवनसँग यस्ता भौतिक वस्तुहरूको अस्तित्व गाँस्नु समय अनुकुल सुधार गर्दै जानु पर्दछ ।

हाम्रो समाजले मात्रै होइन हाम्रो संस्कारले पनि छोरा र छोरीमा भेदभाव श्रृजना गरेको छ । छोरीलाई गरिने संस्कारमा सानैदेखि लोग्ने, विवाहसँग परिचित गराई उसको जीवन विवाह र लोग्नेमा मात्र आश्रित छ भनि बुझाउन कोशिस गरेको जस्तो देखिन्छ । यसरी छोरीको जीवनलाई विवाहसँग लोग्नेसँग मात्र जोड्ने नगरी उसलाई नैतिक ज्ञान, व्यवहारिक शिक्षा, श्रृजनशिल, शिक्षित भएर अगाडी बढ्नसक्ने ज्ञान दिने विधिहरू इहिमा राख्नु पर्दछ । सानै देखि विधवा र सधुवा भन्ने विषयमा परिचित गराउन नखोजी आत्मनिर्भर हुन मद्दत दिने ज्ञानसँग परिचित गराउन सक्ने किसिमको विधी हुनुपर्छ ।

इहिलाई घरेलु कार्य, सिकाउने संस्कार पनि भन्ने गरिन्छ । यसरी अबोध वालिकालाई उसको जीवनको मुख्य उद्देश्य नै घरको काम गर्नु जस्तो गरी छोरी मानिसलाई मात्र घरायसी कामधन्दामा निःपुण हुनु पर्छ भन्ने सोच नै आजका समाजमा नमिल्दो देखिन्छ ।। घर र घरायसी कृयाकलाप छोरा र छोरी दुवैको लागि आवश्यक छ किनभने घर दुवैको वासस्थान हो । त्यसैले यस सम्बन्धि ज्ञान दुवैमा हुनपर्छ ।

बौद्ध समाजमा इहिको माध्यमबाट कन्या संकल्प गरिन्छ । अबोध अन्जान वालिकालाई के को लागि संकल्प गर्ने भन्दा भविष्यमा आफूलाई मन पर्ने समयमा, मनपर्ने जीवनसाथी रोज्ने स्वतन्त्रताको लागि भनि छोरी मानिसको जीवनलाई अरू माथि आश्रित बनाउनु पर्छ भनि प्रशय दिएको जस्तो देखिन्छ । यसरी छोरीलाई विवाह गर्नु उसको जीवनको लक्ष्य नै हो भन्ने जस्तो गरी संस्कार मार्फत आध्यात्मिक ढंगबाटै बाटो देखाउनुको सट्टामा बरू अभिभावक आफैले यस्तो ढंगबाट आफूसँग संकल्प गर्नु पऱ्यो कि हामी हाम्रो छोरीलाई एक असल, नैतिकवान, विवेकशिल,

शिक्षित, श्रृजनशिल, आत्मनिर्भर नागरिकको रूपमा समाजमा परिचित गराउँछौं भनेर आफूले आफैसँग देवतालाई साक्षी राखी संकल्प गर्ने विधि चलाउनु पर्छ जस्तो लाग्छ। बुद्ध धर्मले दिएको ज्ञान मार्गमा हिड्न सक्ने बोधिचित्त भएको नागरिक बनाउन संकल्प गर्नु नै इहिको मुख्य दर्शन बनाउनु पर्छ। छोरीलाई ज्ञानमार्ग, कर्ममार्गमा सवल भएर हिंड्न सिकाउने संकल्पलाई इहिको मुख्य उदेश्य बनाएमा अझ राम्रो हुनेछ।

अन्त्यमा, इहि संस्कार गर्नु नेवार समाजको पहिचान हो तर यसको केही विधिहरूलाई र त्यससँग सम्बन्धित सोचलाई हिन्दु एवं बौद्ध दुबै समाजले परिवर्तन गर्न सक्नु पर्छ। अन्यथा अरूप्रति आश्रित हुने भावना जगाउने संस्कारलाई नगर्दा र नमान्दा नै अहिलेको समय सुहाउँदो हुनेछ जस्तो लाग्छ।

# परिशिष्ट १
# अन्तर्वार्ता

**हिन्दु समाजमा इहिको महत्वः**

रमापती राज (शर्मा) राजोपाध्यायको विचारमा - इहि भनेको विवाह नै हो । विवाहलाई नेवार भाषामा *"इहिपा"* भनिन्छ । भाषा विज्ञान अनुसार नेपाली भाषाको अक्षर 'इ' नेपाली भाषामा 'वि' हुन्छ ।

नेवारहरूले मात्र किन इहि गर्ने गरेको होला भन्ने प्रश्नको प्रतिउत्तरमा - संसारको कुनै पनि देशमा विभिन्न भौगोलिक परिस्थिति, सामाजिक संरचना, मानिसका रहनसहन आदिले गर्दा कतै स्वास्नी मानिसको संख्या बढी भएको देखिन्छ भने कतै लोग्ने मानिसको संख्या बढी भएको देखिन्छ । यस किसिमका कारणहरूले गर्दा कही एक जना स्वास्नी मानिसको धेरै लोग्ने भएको देखिन्छ भने कही एक जना लोग्ने मानिसको धेरै स्वास्नी भएको देखिन्छ । तिब्बतमा स्वास्नी मानिसको संख्या कम र लोग्ने मानिसको संख्या बढी भएको कारणले एक जना स्वास्नी मानिसको धेरै लोग्ने भएको देखिन्छ भने नेपालमा चाहि लोग्न मानिसको दाँजोमा स्वास्नी मानिसको संख्या बढ्न गएको कारणले यहाँ एक जना लोग्ने मानिसको धेरै स्वास्नी भएको पनि देख्न सक्दछौं । यस किसिमको विवाहको कारण कथामदाचित कुनै लोग्ने मानिसको मृत्यु भयो भने धेरै स्वास्नी मानिसहरू विधवा हुन गयो । यसले समाजमा नकारात्मक प्रभाव पार्न थाल्यो । उक्त समयमा समाजमा विधवालाई हेर्न दृष्टि पनि निकै नराम्रो थियो भने अर्को तर्फ विधवा स्वास्नी मानिसहरूले कडा नीति नियममा बस्न पर्थ्यो । यसो हुँदा विधवाको जीवन एकदम कष्टपूर्ण थियो । यस किसिमको कष्टपूर्ण जिन्दगीबाट मुक्ति दिन हाम्रा पूवर्जहरूले वैधव्य दोष निवारणको लागि इहिको शुरूवात गरेका थिए । इहिलाई वैदिक धारणा अनुसार लग्न विभिन्न वैदिक मन्त्र र धार्मिक कथासँग जोडियो । यस अनुसार लोककथा यस प्रकार छ :–

नेपाल मण्डललाई माता पार्वतीको दाइजो भूमी मानिन्थ्यो । एक दिन श्री महादेव र माता पार्वती यस भूमिमा टहलिदै गरेको समयमा एक जना नव युवती एउटा लास अगाडि बसी धुरूधुरू रूदै गरेको देख्नु भयो । त्यो देखि माता पार्वतीले तिमी किन यसरी रूदै छौं भनेर सोध्नु भयो । तब उक्त युवतीले आफ्नो यौवनावस्थामा आफ्नो लोग्नेको मृत्यु भएको र आफूले कष्टकर वैधव्य जीवन बिताउनु पर्ने दुःख व्यक्त गरिन । माता पार्वतीलाई युवती यस्तो कुरा सुनेपछि साह्रै करूणा जाग्यो र श्री महादेवसँग विन्ती गर्नु भयो की आफ्नो दाइजो भूमिमा रहेको स्वास्नी मानिसको दुःख जसरी भए पनि निवारण गर्नु पऱ्यो । श्री महादेवले मनुष्य भएर जन्मे पछि एक दिन सबैले मर्नु नै पर्छ त्यसैले यो दुःख हटाउन सकिदैन भनेर अनेक तरहले सम्झाउन खोज्दा पनि माता पार्वती आफ्नो जिद्दमा अडिक हुनुभयो । स्त्री हठको अगाडि हार खाएर श्री महादेवले त्यसो भए यहाँका स्त्रीहरूलाई श्री विष्णु नित्यसनातन स्वरूपसँग विवाह गराई दिने यसो गर्दा स्त्रीहरू कहिल्यै पनि विधवा हुनु पर्दैन । भनी इहिको चलन चलाई दिनु भयो । यस प्रकार इहिलाई श्री महादेवको उपायको रूपमा चलेको चलन मानिन्छ ।

इहिमा गरिने विवाहको प्रसंगलाई स्वस्थानी ब्रत कथाको कथासँग जोडिएको पाइन्छ जुन यस प्रकार छ :–

दक्ष प्रजापतिले आफ्ना सम्पूर्ण छोरीहरू देवताहरूलाई कन्यादान गरी पठाए। छोरा नभएको कारण जेठी छोरी सतीदेवीलाई मात्र आफ्नो सम्पत्तिको रक्षार्थ आफैसँग राखि राखे। भगवान श्री महादेवले नारद मुनिबाट दक्षले आफ्नो छोरीहरू देवताहरूलाई कन्यादान गरी पठाएको कुरा थाहा पाए पछि श्री महादेवले दक्षले मलाई किन छोरी कन्यादान दिन नबोलाएको भनी ध्यान दृष्टिले विचार गरी हेर्दा सती देवी बाँकी रहेको थाहा पाउनु भयो। दक्षले मेरा लागि सतीदेवी बाँकी राखेको रहेछ अब कन्यादान माग्नको पठाउँ ? बरू आफै जान्छु भनी जानुभयो। दक्षले कन्यादान माग्न आएको श्री महादेवलाई घृणा गरी गाली गलौच गरी पठाए। यो कुरा श्री महादेवल श्री विष्णुलाई सुनाउनु भयो तब श्री विष्णुले हजुरले चिन्ता नगरिबक्सोस् म गएर मेरो लागि भनेर सतीदेवीको हात मागी आउँछु र कन्यादान दिने बेलामा म सतीदेवीको हात हजुरको हातमा पारी दिन्छु भनी जानु भयो। कन्यादान लिने लग्न ठहराई श्री विष्णु कन्यादान लिन पनि दक्षको घरमा जानुभयो। विरणी (दक्षको अर्धाङ्गिनी) ले सुनको कमण्डलुले जलधारा राखी दक्षले सती देवीको हात समाई श्री विष्णुको हातमा कन्यादान दिन लागेको समयमा श्री महादेव भिक्षुक रूपको वृद्ध सन्यासी भई शिक्षा माग्न दक्षको आगँन पुग्नुभयो र भन्नु भयो – मलाई भिक्षा नदीई कन्यादान लिए पनि दिए पनि सराप दिनेछु भन्दा श्री विष्णुले हे सन्यासी मेरो लग्न बित्न लाग्यो अहिले मेरो छेउमा आई बस कन्यादान सकिए पछि भिक्षा दिनेछु भन्दा श्री महादेव श्री विष्णु छेउ आई बस्नु भयो। कन्यादान गर्ने समयमा श्री विष्णुले मायाले दक्षको आँखा छली सतीदेवीको हात भिक्षुक रूपी श्री महादेवको हातमा पारिदिनु भयो। स्वस्थानी ब्रत कथाको यस कथा प्रसंग अनुसार विवाहको विधि विधान सम्पूर्ण श्री विष्णुलाई गरिएको पछि विवाह मात्र श्री महादेवसँग भए जस्तै इहिमा पनि सुनको प्रतिमा रूपी सुवर्ण कुमार (विष्णु) लाई विवाहको सम्पूर्ण विधि विधान गरी बेलफल (महादेवको प्रतिक रूप) सँग कन्याको विवाह गरिन्छ।

इहिमा हुने विवाहको सन्दर्भलाई स्वस्थानी ब्रतकथाको अर्को कथासँग पनि जोडेर हेर्न सकिन्छ :- पर्वत राजाकी छोरी पार्वतीलाई कन्यादान दिन भनी श्री विष्णुलाई बोलाइन्छ। पार्वतीले सो कुरा चाल पाएर आफूले सानै देखि श्री महादेव स्वामी पाउँ भनी पूजा आराधना गरेको कुरा आफ्ना साथी सङ्गीहरू जया, विजया, अजिता, अपराजितालाई बताउछिन् तब ती साथी सङ्गीहरू मिली पार्वतीलाई लुकाउन लग्छन् र पछि पार्वतीको विवाह श्री महादेवसँग हुन्छ। यहाँ पनि वाक कन्यादान श्री विष्णुलाई गरिएको र पछि श्री महादेवसँग विवाह भएको देखिन्छ। यस प्रकार इहिमा गरिने विवाहको स्वरूप स्वस्थानी ब्रत कथामा भएको कथाहरूसँग जोडिएको देखिन्छ।

इहिको उद्देश्य भन्नुनै नित्यसनातन भगवान श्री विष्णुसँग आफ्नो छोरीलाई कुमारीवस्थामा नै विवाह गराइने हुनाले वैधव्य दोषबाट मुक्ति प्राप्त हुन्छ भन्ने विश्वास राख्नु हो।

**प्रश्न : नेवारहरुले मात्र इहि किन गर्ने गरेको ?**

**उत्तर** : त्यस बेलाको समयमा नेवार समाज बढी मात्रामा अगाडि आएको देखिन्छ। विभिन्न क्षेत्रहरू जस्तै व्यापारिक दृष्टिकोणबाट, शैक्षिक क्षेत्रमा, संस्कृति विकास आदिमा अग्रसर भएको हुनाले उक्त समयमा चलेको बालविवाहलाई नकार्न धार्मिक पक्षलाई अँगाली संस्कारको माध्यमबाट इहिको चलन चलाएको देखिन्छ।

**प्रश्न** : **इहि गर्नु पर्छ की पर्दैन ?**

**उत्तर** : हाम्रो परम्परामा बसी सकेको हुनाले इहि गर्नु नै पर्छ ।

**प्रश्न** : **इहिको ब्यवहारिकताको विषयमा केही भन्नुस् न ?**

**उत्तर** : बगैंचामा धेरै फूलहरू फुलेको समयमा एउटा भँमरा विभिन्न फूलको रस चुस्दै एउटा पछि अर्को भमरालाई फेरी रस चुसाउन सक्छ भने जस्तै कुनै स्वास्नी मानिसको लोग्ने मर्दैमा उसले विधवा भएर जीवनको आवश्यकतालाई त्याग्नु पर्छ भन्ने छैन उसले फेरी पनि विवाह गरी आफ्नो जीवनको आवश्यकतालाई पूरा गर्न सक्दछ ।

**प्रश्नः** **इहि गर्नु पर्छ की पर्दैन ?**

**उत्तर** : जसरी हामीले हाम्रो धेरै जस्तो परम्पराहरूलाई मान्दै आएका छौं त्यसरी नै इहि पनि हाम्रो परम्परामा बसी सकेको हुनाले यसलाई मान्नु पर्छ ।

इहिलाई अभिभावकको कर्तव्यको रूपमा लिनुपर्छ । पशु पंक्षीले त आफूले सन्तान जन्माई सकेपछि त्यसलाइ हुर्काउने जिम्मेवारी पूरा गर्छ भने हामी त मानिस, पशु पंक्षी भन्दा धेरै विकसित जीव भएर हामीले हाम्रो संस्कारलाई हाम्रो जिम्मेवारी सम्झी पूरा गर्नु पर्छ ।

**प्रश्न** : **इहिलाई विवाह भन्न सकिने बलियो आधार केही छ कि ?**

**उत्तर** : इहिपा (विवाह) गर्ने बेलामा पढिने मन्त्रोचारण नै इहिमा कन्यादान गर्ने बेलामा पढिन्छ, जुन तिन पटक पढिन्छ । यसले पनि 'इहि' लाई विवाह नै हो भन्न सकिन्छ ।

**बलदेब जुजुको विचारमा** - प्रत्येक मानिसको आफ्नो घर, परिबार, समाज हुन्छ । त्यसै अनुरूप उसको बानी, व्यहोरा बनेको हुन्छ । नेवार समाजको पनि आफ्नै मुल्य मान्यता छन् । विभिन्न चाडवाड, रीतीथीती, संस्कारहरू मनाउने गर्दछन् । ती चाडवाड रितीथिती संस्कारको आफ्नै विशेष स्थान रहेको छ । नेवार संस्कारले छोरा र छोरीलाई सधै विशेष स्थान दिइराखेको हुन्छ । नेवार संस्कृतिमा मात्र यस्तो संस्कारहरू छन, जसले छोरा र छोरीलाई समान बनाएको छ । छोरा र छोरीलाई गरिने विभिन्न संस्कारले दुवैलाई विशेष स्थान दिएको छ । नेवार समाजमा गरिने संस्कारहरूले सधै मानिसलाई देवता बनाउन प्रयासरत देखिन्छ । जन्म अगाडीका संस्कारहरू देखि गर्दै गएर अन्तमा मानिस बुढो वा बुढी भएपछि जंकवो (भीमरथारोहण) गरी पूजाआजा गरी देवतालाई जस्तै रथमा राखी पुज्ने गरेको पाइन्छ ।

हाम्रो पूर्वजहरूको दूर दृष्टिको सफल परिमाणको रूपमा हामीले हाम्रो संस्कारहरूलाई लिन सक्दछौ । जुन समय र परिस्थिति अनुसार मिल्दो र आवश्यकता अनुसारको छ । त्यसैले हामी हाम्रो संस्कारलाई दार्शनिक सिद्धान्तमा बनेका व्यवहारिक आचरण भन्न सक्दछौं । हामी दश संस्कारलाई मान्ने गर्दछौं । जुन यस प्रकार छन् ।

(१) पुंसवन (धौवजि नकः वनेगु)

(२) जातकर्म (मचाबु व्यंकेगु)

(३) नामकरण (नां तयेगु)

(४) निष्क्रमण (मचाबू लहिकः वनेगु)

(५) अन्नप्राशन (मचा जा नकेगु)

(६) कर्णवेध (न्हायपं प्वाः खनेगु)

(७) विद्यारभ (आखःस्यनेगु)

(८) चूडाकर्म (बुसँखा, इहि)

(९) उपनयन (कयतापूजा, बरे छुये, बाह्रा तयेगु)

(१०) विवाह (इहिपा)

प्रत्येक मानिसहरूको लागि आ-आफ्नो समाज ठूलो हुन्छ। नेवार समाज यस्तो समाज हो जहाँ नारी पुरूषको समान हक अधिकार छ। यहाँ अधिकारको विषयमा छोरालाई मात्र बढी स्थान नदिइकन विभिन्न संस्कारहरू मार्फत छोरीको लागि पनि त्यति नै जिम्मेबारी र महत्व दिइएको छ।

जसरी कुमालेले एउटा माटोको डल्लोलाई कुमालेको चक्कामा राखि आफ्नो औलाहरूको साहायताले आकार दिदै अनेकौ किसिमको भाँडो बनाउँछ, त्यसरी नेवार संस्कृतिले एउटा मासुको डल्लो जस्तो भएर जन्मेको बालक जो आफै जन्मना साथ आमाको दुध समेत खान नसक्ने अवस्थामा हुन्छ त्यस्तो बालकलाई जन्मेदेखि विभिन्न संस्कारहरू गर्दै उसलाई योग्य सामाजिक प्राणी बनाउछ। त्यसैले होला कसैको चालचलन हेर्नुपर्दा उसको समाज हेर्ने गरिन्छ।

हाम्रो समाजको संस्कारमा दार्शनिक सिद्वान्त अनुसार बनेको रितीथिती छ। जुन रितीथितीले व्यवहारिक पक्षलाई अंगालेको छ। जस्तो धौवजि नक (पुंसवन) बनेगु संस्कार गर्भाधारण गरेको आठ महिनामा गरिन्छ। माइति पक्षबाट विभिन्न खानेकुरा, फलफूल, दहि, योमरी आदि लागि छोरीलाई खुवाउन लगिन्छ। यसो गर्नुको मुख्य कारण गर्भावस्था भनेको यस्तो अवस्था हो जुन वेला मिठो मिठो खान मन लाग्ने, राम्रो हेर्ने, राम्रो सुन्ने आदि विशेष इच्छा जाग्ने हुनाले विशेष खाना खुवाउनको लागि माइती पक्षबाट खाने कुराहरू लाने गरिएको हो। त्यसरी नै मचाबू व्यंकेगू (जातकर्म) बच्चा त जन्म्यो आफ्नो जातमा जन्मेको हो भनि देवता पूजा गरी चोखाउने गर्छ। वास्तवमा यो संस्कार सफा सुग्घर गर्न बनाइएको हो। उहिलेको समयमा अहिले जस्तो स्वास्थ्य उपचारको सेवा नभएको हुँदा घरमा नै सुडिनी वा जान्ने बुझ्ने अनुभव प्राप्त महिला वा अजी अघि राखि बालक जन्माउने हुनाले उक्त समयमा भएको फोहर सफा गर्न संस्कार कै नाम दिई गर्ने गरिएको हो। यसपछि गरिने अरू संस्कारहरू पनि सबै नै व्यवहारिक छन्। जस्तै (नामाकरण) नां त्येगु, मचाबू लहि वनेगु (निष्क्रमण) पनि सान्दर्भिक एवं व्यवहारिक रूपबाट चलाइराखेको संस्कार हो। जन्म संस्कारमा अन्नप्राशनसम्म छोरा छोरीको लागि एउटै नै गरिन्छ तर यसपछि भने छोराको लागि छुट्टै छोरीको लागि छुट्टै गरिन्छ। यस्तै संस्कारमा इहि यस्तो संस्कार हो जुन छोरी नावालिक अवस्थामा हुँदा अर्थात रजस्वला हुनु अगाडी नै गरिने संस्कार हो। इहि छोरी केहि हुर्किसकेको उमेरमा गरिन्छ। केहि अह्राउँदा गर्न सक्ने र केहि हदसम्म अलिक बुझ्ने भइसकेको हुन्छ।

इहिको विधि लामो र ठूलो तरिकाबाट गर्नुपर्ने हुनाले एकै दिनमा नगरी दुई दिन लगाएर गर्ने गरिन्छ।

हरि राम जोशीको विचारमा - समाजलाई राम्ररी नीति नियममा चलाउन बनाइएको कर्म नै धर्म हो । धर्मले मानिसलाई गर्न हुने नहुने कुरा सिकाउँछ । धर्मले मानिसलाई गर्न हुने नहुने कुरा सिकाँछ । धर्म अनुसार मानिसले आफ्नो जीवनलाई सकारात्मक ढंगबाट अगाडि बढाउन गरिने कार्य नै संस्कार हो । नेवार समाजमा छोरीलाई तालिम दिनको लागि गरिने संस्कार इहि पनि एउटा हो । किनभने छोरीको जात भनेको अर्कोको घरमा जानु पर्ने जात हो । आमा बुबाको घरमा रहँदा जसरी बसे पनि जे गरी बसे पनि आमा बाको रेखदेखामा बस्छ तर अर्काको घरमा गए पछि अरूको रेखदेखमा आफूलाई नियममा राख्नु पर्ने चलन भएको हुँदा छोरीलाई हरेक कार्यमा निपुण हुन सिकाइन्छ । त्यसैले इहिमा घरेलु कृयाकलाप सम्बन्धी केही तालिम दिइन्छ ।

इहिमा बाल अवस्थामा नै गरिने संस्कार हो । इहि गर्दा बालिकालाई बेलसँग विवाह गरिन्छ । त्यसैले यसलाई बेल विवाह पनि भनिन्छ । स्वस्थानी कथामा जसरी सतीदेवीले विष्णु मार्फत महादेव वर पाउँछ त्यसरी नै इहिमा स्वर्णप्रतिमा (सुवर्ण कुमार) राखी पूजा गरी बेल ( महादेव) लाई कन्यादान गरिन्छ । इहि गरिसके पछि बालिकालाई ठूलो भयो भनी ठूलो व्यक्तिले गर्ने नियमहरू बार्नु पर्ने हुन्छ । देवता को पनि देवता महादेवसँग कन्याका विवाह हुने भएको हुँदा इहि गरिसकेको कन्याले कहिले पनि विधवा हुन नपर्ने मान्यता राखिन्छ । नेवार समाजमा गरिने इहिलाई वैदिककाल देखि चलिआएको मान्न सकिन्छ । वैदिककालमा स्त्रीहरूको चार पटक विवाह हुने कुरा वैदिक ऋचाहरूमा उल्लेख गरिएको छ । ऋग्वेदको मं. १० सू. ८५ श्लोक ४०-४१, अथर्ववेदमा चतुर्दशं काण्डम, द्वितीयोनुवाक : सू. २ श्लोक ३-४ को अध्ययनबाट जानकारी पाउन सकिन्छ ।

पहिलो विवाह सोम - इहिमा सूर्वण कुमारसंग
दोस्रो विवाह गन्धर्व - बाऱ्हा ख्यासंग
तेस्रो विवाह अग्नि - बाऱ्हा निकाल्दा सूर्यसंग
चौथो विवाह मानिससंग

सोमसँग हुने विवाहमा स्त्रीहरूको सोमनाथ (सोमेश्वर) महादेवसंग विवाह हुन्छ । सोमनाथ महादेवसँग हुने विवाहलाई बेल विवाह मानिन्छ । बेललाई महादेवको प्रतिकको रूपमा सामेवत धर्म ग्रन्थमा उल्लेख गरिएको छ । इहिमा बेललाई महादेवको प्रतिक रूपमा मानि कन्याको विवाह बेलसँग गरिन्छ । स्वास्थानी ब्रतकथामा भएको कथा अनुसार सतीदेवीले भगवान विष्णु मार्फत महादेवलाई प्राप्त गरेको कुरा उल्लेख गरिएको छ । त्यसरी नै इहिमा स्वर्ण प्रतिमा (सुवर्ण कुमार) राखी बेललाई आकार हेरी कन्याले भविष्यमा दुलहा कस्तो पाउँछ भनी अडकल गर्ने चलन छ । ठूलो भद्दा आकारको बेल पाएमा बूढो लोग्ने पाउँछ भनी भन्ने गरिन्छ । बेल छान्नु हुँदैन भन्ने पनि भनाई छ ।

**प्रश्न : तपाईको बिचारमा इहि किन गर्नु परेको होला ?**

**उत्तर** : मानिस एक सामाजिक प्राणी हो । उ समाज विना रहन सक्दैन । समाज भएन भने मानिस एक्लो हुन्छ । जसरी कुनै पनि संघ संस्थाको सदय हुन त्यसको निश्चित नीति नियम पालना गर्नुपर्छ त्यसरी नै समाजमा बस्नको लागि समाजको नियम पालना गर्नु पर्छ । समाजको नियम भनेको नै संस्कारहरू हुन् ।

समाजले मानिसलाई स्थान दिन्छ भने संस्कारले परिचय दिन्छ । संस्कारले ज्ञान दिंदै मानिस भएर मानिस हुन सिकाउँछ । संसारमा मानिस बाहेक अनेकौं प्राणीहरू छन् तिनीहरू जन्मन्छ, खान्छ, हुर्कन्छ, मर्छ तिनीहरूको कुनै संस्कार हुँदैन । यदि मानिस भएर जन्मेपछि पनि जन्मने, खाने, हुर्कने, मर्ने मात्र गर्छ भने उ पशु समाज हुन्छ संस्कार विनाको जीवन केवल पशुले मात्र जीउन सक्छ ।

चक्राधरनन्द राजोपाध्याय (पुजारी चाँगुनारायण) को विचारमा - इहि भनेको बेल विवाह हो । यो वैधव्य दोष निवारणको लागि चलाइएको विधि हो । लोग्नेको मृत्यु पश्चात पनि एक्लो जीवन बिताउन नपरोस भनि समाजमा घुलमिल गर्न सजिलो होस भनि चलाइएको चलन इहि हो । त्यो बेलाको समाजमा विधवालाई घृणाको दृष्टिले हेरिने भएको हुँदा त्यस्तो दृष्टिकोणलाई परिवर्तन गर्न इहिको शुरूवात गरिएको हो । इहिमा गरिने पूजा विधिमा वैद्धिक एवं तन्त्र दुवै छ । हामीले गर्ने जुनसुकै पूजामा पूजा गर्ने देवदेवीलाई पारिवारीक सदस्यकै रूपमा पूजा गर्ने गर्छैं । जस्तैः कुलदेवतालाई आंगमाजू (आमा) को रूपमा पूजा गर्छौं ।

**प्रश्न : तपाइको बिचारमा इहि गर्नु पर्छ की पर्दैन जस्तो लाग्छ ?**

**उत्तर** : हाम्रो संस्कृति, संस्कार भनेको हाम्रो परिचय भएको हुनाले हामीले हाम्रो परिचयको लागि आफ्नो संस्कृति जोगाउन संस्कारलाई गर्नु पर्दछ । इहि शिक्षाको दृष्टिकोणबाट सुधारात्मक सोच हो । आजको बदलिदो समाजमा इहि गर्नु नै पर्छ भनेर हामी कसैलाई जोड पनि गर्न सक्दैनौ ।

**प्रश्न : इहिमा गरिने कुन विधिले इहि विवाह हो भन्ने कुरालाई प्रष्टाउँछ र ?**

**उत्तर** : साक्षीको रूपमा श्री फल वेल राखि सुवर्ण कुमार (राम्रो वर्ण भएको, विष्णुको प्रतीक) लाई कन्यादन गरिने विधिबाट इहि विवाह हो भन्न सकिन्छ । श्री फलसँग विवाह गराइनुको अर्थ जीवन सफलताको लागि फललाई लिइएको हुन सक्छ । फलले प्रकृतिसँगको सम्बन्ध देखाउँछ ।

**प्रश्न : विधवालाई नेवार समाजमा कस्तो दृष्टिकोणबाट हेरिन्छ ?**

**उत्तर** : नेवार समाजमा विधवाले जुनसुकै रङ्गको लुगा लगाउन सकिन्छ । आफ्नो इच्छा अनुसार र कुनै पनि शुभकार्यमा अरू आइमाई मानिस सरह सहभागी हुन पाउँछन् । 'भुई सिंन्ह' (सिन्दूर)को मात्र प्रयोग नगरेको पाइन्छ । यो प्रयोग गर्न बन्देज भनि कतै उल्लेख नभएको र कसैले नभनेता पनि स्वविचारले प्रयोग नगरेको देखिन्छ । सायद यस्तो गर्नुमा लोग्ने प्रतिको सद्भाव हुन सक्छ ।

# परिशिष्ट २

**बौद्धै समाजमा इहिको महत्व**

पं. बद्री रत्न बज्राचार्यको विचारमा - इहि गर्नु भनेको समयमा कन्यालाई संकल्प गरी राख्ने विधि हो। नेवारी भाषामा 'इ' भनेको समय हो र 'पा' भनेको विवाह हो। पहिले पहिले छोरीलाई रजस्वाला भैसकेपछि जन्म घरमा राख्न हुँदैन भन्ने मान्यता थियो। यदि यस्तो भएमा अलछिन हुन्छ भन्ने गरिन्थ्यो। त्यसैले समय भित्र नै कन्यालाई विवाह गरी अन्माइन्थ्यो। यस्तो मान्यतामा त्यसबेला बाल विवाहको चलन थियो। बाल विवाह जस्तो जघन्य अपराधबाट बच्न बज्राचार्यहरूले इहि संस्कार गरी समयमा कन्यालाई संकल्प गरी राख्ने संस्कारको शुरू गरेको हो।

बाल विवाह गर्दा बालिकालाई शारीरिक एवं मानसिक नकारात्मक असर त पर्छ नै यदि केही गरेर लोग्ने मऱ्यो भने जिन्दगीभर विधवा भएर लोग्नेकै घरमा बस्नु पर्थ्यो। यसरी लोग्नेको घरमा लोग्ने बिना बस्नु पर्दा नोकर सरहको जीवन बिताउन पर्थ्यो। यस्तो सामाजिक कुरूटी घटाउन इहि संस्कार गरिएको हो।

बौद्ध धर्मदर्शनले केटीहरूको दुःख हटाउनको लागि बालविवाह जस्तो प्रथालाई त्यागी इहि गर्ने चलनको शुरूवात गरिएको हो। भगवान बुद्धको बचन *"बहुजन हिताय, बहुज सुखाय"* भन्ने सूत्रको आधारबाट आचार्यहरूले इहि क्रियाकर्मको शुरूवात गरेको देखिन्छ। त्यसैले इहि यस्तो संस्कार हो जसले नारीलाई सम्मान गर्न सिकाएको छ। समयमा इहि गरी संकल्प गरी राखेको कन्याले पछि वयस्क भैसकेपछि आफूलाई मन परेको वर खोजी विवाह गर्न सक्दछिन् भन्ने मान्यता राखिन्छ।। यसबाट इहिले नारीलाई स्वतन्त्रता प्रदान गरेको जस्तो पनि देखिन्छ। इहि भनेको विवाह होइन। यो त केवल कन्या संकल्प गर्ने संस्कार हो।

बिहारमा भिक्षुहरूले कन्याहरूलाई सात आठ दिन राखी पञ्चशील दिइ विहान बेलुकी, रातिको विशेष कार्यक्रम बनाई शुद्ध बौद्ध आचरण अनुसार 'गृहस्थीले गर्नु पर्ने कार्यको ज्ञान दिई' बौद्ध शिक्षा दिने चलन पनि छ । साथै अर्को विचारमा- डा. नरेशमान वज्राचार्यको मतआफ्नो संस्कृति समाज कुनै पनि व्यक्तिको लागि महत्वपूर्ण हुन्छ। त्यसैले सबैले आफ्नो धर्म, संस्कार, संस्कृति बचाउन आफ्नो आफ्नो क्षमताले भ्याउने किसिमबाट गर्ने गर्दछन्। धर्म, संस्कार, संस्कृति भनेको आफ्नो समाजको परिचय पनि हो। यसले देशको गौरव बढाउँछ। बौद्ध समाजले पनि अफ्नो धर्म, संस्कार संस्कृतिलाई विशेष महत्व दिई नेपाल मण्डलको एउटा महत्वपूर्ण अङ्गकोरूपमा लिई यस अन्तर्गत पर्ने "दशकर्म" गर्ने गर्दछन्। हाम्रो समाज आफ्नो कर्मलाई धर्मरूपमा लिई त्यसलाई अपनाउने भएको हुँदा "दशकर्म"लाई धर्मकोरूपमा नै लिने गर्दछन्। धर्म त्यसलाई भनिन्छ, जुन धारणा गर्न सकोस्। धारणा गर्नु भनेको सामाजिकरण हुनु हो।

मानिसको जीवनमा स्वभाविकरूपबाट आउने चरणलाई सभ्य तरिकाबाट अपनाउनु नै संस्कार हो संस्कार गर्नु नै कर्म गर्नु हो। दशकर्मलाई धर्मको दर्शन, आचार एवं उद्देश्यको आधारमा अझ परिष्कृत, सुसंस्कारित तथा उद्देश्यमूलक बनाइएको देख्न सकिन्छ।

दशकर्मलाई विशेष कर्म मानि उद्देश्यमूलक ढंगबाट बौद्ध समाजले अपनाएको् देखिन्छ। दशकर्म अन्तर्गत पर्ने कर्म विधिहरू १. गर्भाधानकर्म २. पुसवनकर्म, ३. सीमन्तोपनयनकर्म, ४. जातकर्म, ५. नाम कर्म, ६. अन्नप्राशनकर्म, ७. चूडाकर्म, ८. ब्रतादेशनकर्म, ९. ब्रतयोक्षणकर्म र १०. पाणीग्रहणकर्म। यी संस्कारहरू केहि छोराकोलागि मात्र, केहि छोरीकोलागि मात्र र केहि दुबैलाई गरिन्छ।

विभिन्न दशकर्म समय परिस्थितिको माग अनुरूप सुहाँउदो ढंगबाट बौद्ध आचार्यहरूद्धारा सम्पन्न गराउँछन् जसलाई हामी व्यवहारिक भनेर भन्न सक्छौं। यस दशकर्ममा चूडाकर्म अन्तर्गत गरिने "इहि" छोरीलाई कन्यावस्थामा हुँदा नै गरिने कर्म हो। इहिलाई बुझ्न यसको व्यवहारिक पक्षको अर्थबाट बुझ्दा अझ बढी प्रष्ट हुने देखिन्छ। सामान्य जनमान्समा इहिलाई विवाह भन्ने भ्रम परेको देखिन्छ र यसलाई नेपाली भाषामा बेल विवाह नै भन्ने गरिन्छ। नेपालभाषामा विवाहलाई इहिपा भनिन्छ भने इहि र इहिपामा धेरै भिन्नता देखिन्छ।

इहिपा भनेको वयस्क भएपछि यौवनत्व प्राप्त भई सकेपछि केटा र केटीलाई प्रणयशूत्रमा बाँधिनुलाई विवाह भनिन्छ। नेपाल भाषामा "इ" भनेको समय हो भने "पा" भनेको जोडी त्यो पनि श्रीमान् श्रीमतीको जोडी भन्ने बुझिन्छ। तसर्थ इहिपालाई सुसमयमा गरिएको जोड भनी बुझ्न सक्छौं भने इहि भनेको छोरी पाँचदेखि एघार वर्षभित्रमा विजोड वर्ष पारेर शुभ मुहुर्तको दिनमा गरिने पूजा विधि भन्ने बुझिन्छ। जसमा विशेष किसिमको वस्त्र दिइन्छ जसलाई *"इहिपटासी"* भनिन्छ। इहिपटासी लगाउन दिएपछि केही विधि सकिएपछि बुवाले छोरीको हातको बूढी औंला समाति "कन्यादान" गरी कन्या संकल्प गराइन्छ।

बौद्ध समाजमा इहि गरी कन्या संकल्प विधि गरिसकेको छोरीले वयस्क भैसकेपछि आफूलाई मनपर्ने जीवनसाथीरोजी विवाह गर्न स्वतन्त्र भएको मानिन्छ।

**बौद्ध समाजमा इहिका विशेषताहरु**

जुनसुकै कार्यमा पूजा विधि त हुन्छ नै पूजाबाटै कार्यको थालनी र अन्त पनि गरिन्छ। त्यसैले इहि, ब्रतबन्धन, विवाहमा पनि विशेष पूजाका विधिहरू हुन्छन्। यसमा गरिने विशेष पूजाको विधि र स्वरूप हेरेर नै कुन पूजा कुन उत्सवमा भइराखेको छ भनि भन्न सकिन्छ। जस्तै : ब्रतवन्धनमा "कय्ता"लाई पूजा गरी छोरालाई दिनु विशेष पूजा हो भने विवाहमा "ह्वंकेगु" गर्नु विशेष विधि हो। त्यसैगरि इहिमा शतभेदिका लगाइ दिनु, टाउकोमा मोकि लगाइ दिनु, इहि पटासी लगाउन दिनु विशेष हो।

इहिलाई बुझ्न यसलाई प्रयोग हुने अवस्थाबाट बुझ्दा बढी सजिलो हुन सक्छ। इहि कस्तो अवस्थामा गरिने संस्कार हो भने बालिकाको अन्नप्राशन सकेपछि केही हुर्केको अवस्थामा तर यौवनावस्थामा प्रवेश नगर्दै अथवा रजस्वला हुनु निकै अगाडि विजोड वर्षमा पारी सात, नौ, एघार

वर्षको उमेरमा बालिकालाई लक्षित गरेर एउटा पूजा गरिन्छ त्यो पूजालाई नै इहि भनिन्छ। जसरी केटा बालकको पनि विजोड उमेर पारेर ब्रतबन्धन गरिन्छ त्यस्तै ब्रतबन्धनमा 'कयुता' विशेष प्रकारको कपडा दिइन्छ जुन गुप्ताङ्ग छोप्नको लागि दिइन्छ। इहिमा पनि विशेष प्रकारको वस्त्र दिइन्छ, जसलाई 'इहिपटासी' भनिन्छ जुन साडी जस्तै गरी लगाउन सकिन्छ।

हाम्रो समाजमा बेल विवाहको नाम दिएर इहिलाई विवाह मानिने गरिएता पनि इहिको विधि विधानमा विवाहसँग मिल्दो कुनै कर्म देखिँदैन वा गरिदैन शाब्दिक अर्थमा हेर्दा 'इ' भनेको खमय हो भने 'हि' भनेको रगत हो। त्यस्तै गरी 'पा' भनेको जोडीको अर्थ लाग्छ। त्यो पनि श्रीमान र श्रीमतीको जोडी भन्ने अर्थ लाग्छ। बौद्ध धर्म दर्शन अनुसार इहिलाई समयमा गरिने संकल्प मानिएको छ।

**बौद्ध समाजमा इहिको विशेष विधि**

इहिमा शतवेदिका माला लगाई दिनु, इहिपटासी दिनु, मोकि टाउकोमा लगाइदिनु विशेष पूजा हो। इहिको विधि दुई दिनमा सम्पन्न गरिन्छ। पहिलो दिनमा सामान्य पूजाहरू बाहेक विशेष पूजा विधिमा गुरूभाजूले शतवेदिका बालिकाको उचाइ अनुसारको लम्बाइमा एकाइस पटक घुमाइए लिइन्छ। यो लम्बाई लिदा बालिकाको पैतालाले एउटा लठ्ठी टेक्न च्याप्न लगाइन्छ भने टाउको माथि अर्को लठ्ठी राखी अरू कसैलाई समाउन लगाइ उक्त लठ्ठीमा अड्काएर शतवेदिकाको माला बनाइन्छ।

दोस्रो दिनको विशेष पूजामा गुरूभाजूले इहिपर्सी दिन्छ र साथसाथै विभिन्न आभूषणहरू पनि दिइन्छ यसैंक्रममा सिन्दूर लगाई दिने काम पनि गरूभाजूबाटै हुन्छ। यसपछि टाउकोमा मोकी लगाइदिन्छ।

अघिल्लो दिनमा बनाइएको शतभेदिकामा विभिन्न सामग्रीहरू जस्तै : अदुवा, नुन, चाकू, मिकुसी, मदनफल, शोभायफल, सन्या, ग्वय, ग्वा, ताय, आखे, ज्योना लट्टेमा पोको पारी शतभेदिकामा झुण्डाइन्छ। यसरी झुण्डाएको यि सामग्रीहरू आयुर्वेदिक दृष्टिकोणबाट स्वस्थकारी भनिएका सामग्रीहरू हुन्। यसपछि बालिकाको हातमा नन्दाबलि लेखिन्छ, त्यसको माथि ज्योना लप्ते राखी त्यसमा पानको पात, सुपाडी, लावा, अक्षता, वेल राखी हातलाई सःखि खिप (एक किसिमको डोरी)ले हात बाँधिन्छ। यसपछि बाबुले समाउन लगाई अग्नी प्रदक्षिणा गराइसकेपछि बाबुको काखमा राखी बालिकाको औंला समाई आमाले जलधारा, गाईको दूधको धारा खसाल्न लगाई कन्या संकल्प गरिन्छ। त्यसपछि बाँधेको हात खोलिदिन्छ र हातमा भएको ज्योना लप्टेको पोकोलाई सलापामा राख्न लगाइन्छ। इहि गर्दाको समयमा विभिन्न विशेष पूजा कर्म गर्दा गुरूभाजूले पढ्ने मन्त्रोचारणबाट पनि त्यो के कार्य कुन उद्देश्यले गरिएको हो भन्ने प्रष्ट पार्न सकिन्छ।

इहिपटासी दिने समयमा *'ॐ दिब्य बासूते स्वा हा !'* भनी मन्त्र उच्चारण गरेर वस्त्र कन्यालाई दिइन्छ। यसको अर्थ *'यो वस्त्र दिव्य वस्त्र हो'*। विभिन्न बस्त्रहरू र अरू सरसामान दिने भएता पनि 'इहिपटासी'लाई दिव्य वस्त्र भनिएको छ।

शतवेदिकामा भएको सामग्रीहरू सोन्हवटा १६ र ३२ वटा व्यञ्जनसँग सम्बन्धित छ। शतभेदिका बालिकाको उचाइसँग सम्बन्धित छ।

बौद्ध धर्ममा बोधिचित्त भनेको बुद्धको स्थानमा पुग्न अर्थात् बोधिसत्व प्राप्त गर्न प्रयत्नशील हृदय भएको व्यक्ति भन्ने बुझिन्छ। (बोधिचित्त जगत हितको काम गर्ने इच्छा भएको जसले राम्रा र असल कार्य गरी बुद्धत्व प्राप्त गर्न सक्छ भन्ने अभिप्रायमा वेल फललाई राखिन्छ।)

कन्यासंकल्प गर्नुअघि बालिकाको हात बाँध्नु लगाएर मन्त्रउच्चारण गरिन्छ यो पनि बोधिसत्वसँग सम्बन्धित छ। यसको अर्थ हो हातमा हात मिलाएर बुद्धले गर्ने कार्य जस्तै कार्य गर्न सकोस, प्रज्ञापाय मण्डलपूर्ण गर्न सकोस् भन्ने अभिप्राय राख्नु हो।

कन्या संकल्प गर्दा 'यो केटी मैले संकल्प गरें' भनि मन्त्रोचरण हुन्छ तर के को लागि हो स्पष्ट देखिँदैन। स्पष्ट अर्थ नलगाईको कारण यसलाई विभिन्न विद्वानहरूले आ-आफ्नै ढंगबाट अर्थ लगाइएको छ। कुनै पनि चिज संकल्प गरे भनेपछि के को लागि भन्ने प्रश्न त उठ्छ नै। संकल्प भन्नु नै केही उद्देश्यको लागि हुन्छ। विना उद्देश्य संकल्प हुँदैन। त्यसैले यहाँ यस संकल्पलाई विभिन्न समाजमा चलेको कुराहरूको प्रभावको ढङ्गबाट हेर्न सकिन्छ।

१. बौद्ध धर्मालम्बीहरूको संख्या कम थियो र यहाँ हिन्दुमार्गीहरू बढी हुँदा उनीहरूसँग सहभावको लागि हिन्दुहरूले मानेको आस्था कन्यादान महा दान भनी रजस्वला नभएका कन्यालाई दान दिने चलनलाई नकार्न नसकी इहिको माध्यबाट कन्या संकल्प गरी कन्यादान गरेको अर्थ लगाएको हुन सक्छ।

२. बौद्धधर्म अनात्मावादी र अनिश्वरवादी धर्म भएको हुनाले इहिमा बोधिसत्व वा श्रवणकुमारसँग विवाह हुन्छ भनी इहिलाई विवाह भनिएको कुरा पटक्कै नमिलेको हुनाले संकल्प गरिएको हुन सक्छ।

३. तत्कालिन समयमा चलेको बालविवाह प्रथालाई हटाउन सुधारवादी सोचको उपायकोरूपमा इहिलाई लिन सकिन्छ। वालाअवस्थामा विवाह भएर अर्काको घरमा जानु पर्दा कन्याले भोग्नु पर्ने अनेक किसिमको दुःख कष्टबाट बचाउनको लागि चलाइएको प्रथाकोरूपमा इहिलाई लिएर कन्या संकल्प मात्र गरेको हुन सक्छ।

४. धार्मिक आस्था जस्तै कन्यादान गरेमा सय गाई दानको फलप्राप्ति हुने, अश्वमेघ यज्ञ गरको फल प्राप्ति हुने र नगरेमा मातापिताको नर्कबास हुने आदि आदि सोचबाट बच्न साच्चिकै गरी विवाह नगरीकन कन्यादान केवल संकल्प मात्र गरेको हुन सक्छ।

अन्ततोगत्वा बौद्ध धर्ममा इहिलाई विवाह मानिदैन। समाजमा इहिलाई वेल विवाह भनिएता पनि यसमा गरिने विधि विवाह गर्ने समयको कुनै विधिसँग मेल खाँदैन। त्यसैले इहिलाई वेल विवाह भन्न नहुने देखिन्छ।

## परिशिष्ट ३

**इहि गराईसकेको कन्याको अविभावक अनिल प्रसाद श्रेष्ठ (४० बर्ष, कालधारा) ज्यूसँगको अन्तवार्ता ।**

**प्रश्न : छोरीलाई इहि किन गराउनु भयो ?**

**उत्तर** : नेवारको चलन भएकोले गराउनु पर्छ र गर्नु नै पर्ने संस्कार भएकोले गराएको हो । जीवनमा हरेक पक्षमा राम्रोको लागि शुभकामनाको रूपमा र जीवन अगाडी बढाउन आत्मविश्वासको लागि इहि गराएको हो । यदि कथमकदाचित भविष्यमा कुनै नराम्रो घटना घट्यो भने पश्चाताप गर्न नपरोस भन्ने विश्वासमा इहि गरेको हो । हामी हाम्रो संस्कृति परम्परामा विश्वास राख्ने भएकोले आफ्नो संस्कृतिबाट नछुटोस भनेर इहि गराएँ । किनभने आफ्नो संस्कृति समाजबाट बाहिर पनि त बस्न नमिल्ने कुरा हुन्छ ।

**प्रश्न : इहि नगर्दा पनि कुनै फरक पर्छ ?**

**उत्तर** : हाम्रो संस्कारमा गराउनु पर्ने क्रमवद्ध संस्कारहरूमा इहि पनि पर्ने भएको हुनाले यदि गरेन भने अपुरो हुन्छ । संस्कार गर्ने क्रममा अपुरोपन आउनु भनेको जीवन अपुरो हुन्छ जस्तो लाग्छ ।

**प्रश्न : आफ्नो छोरीलाई इहि संस्कार भएकोमा कस्तो महसुस गर्नुभयो ?**

**उत्तर** : कुनैपनि कार्य सम्पन्न गर्न त्यसको लागि पूर्व तयारी मिहेनत त चाहिन्छ भने त्यस कार्य सम्पन्न नभएसम्म केही चिन्ता पनि लाग्ने हुन्छ र त्यस कार्य सम्पन्न भइसकेपछि आनन्द पनि लाग्ने हुन्छ । छोरीलाई इहि गराइसकेपछि परंपरागत जिम्मेवारी पुरा गर्न पाएको हुनाले आनन्द र इहि गरिरहेको क्षणमा रमाइलो महशुस गरें ।

**प्रश्न : इहि गरिसकेको कन्याले भविष्यमा यदि उसको लोग्ने मर्‍यो भने पनि वैधव्य जीवन बिताउन पर्दैन भन्ने सुनिन्छ, त्यसमा तपाईलाई कतिका विश्वास राख्नु हुन्छ ?**

**उत्तर** : हामी भगवान र धर्ममा विश्वास राख्ने भएको हुनाले विश्वास लाग्छ । आष्तिक भएको हुनाले यसैमा हामी बाँच्नु पर्छ तर समय अनुसार परिवर्तन पनि गर्दै लग्नुपर्छ व्यवहारमा लागु भएको छ कि छैन भन्ने प्रश्नमा चाहि मानिसको आफ्नो आफ्नो सोचाइमा भर पर्ने कुरा हो ।

**प्रश्न : इहि अहिले जस्तो किसिमले हुने गरेको छ त्यस्तै किसिमले संचालन गर्दा नै ठिक हुन्छ कि त्यसमा केही सुधार ल्याउनु पर्छ ?**

**उत्तर** : अहिलेको किसिम भन्नाले ?

**प्रश्न : सामुहिक वा एकल भन्न खोजिएको हो ।**

**उत्तर** : मैले मेरो दुवै छोरीलाई सामुहिक रूपमा नै इहि संचालन गरेको स्थानमा इहि गराएको हुँ । यसको खर्चको विषय भन्दा पनि विधि ठूलो हुने भएकोले सामुहिक रूपमा नै गरेको ठीक लाग्छ । तर कसैले एकल पनि गर्ने गर्छन भने त्यो पनि ठीक हुन सक्छ ।

**प्रश्न : सामुहिक इहि गर्दा चित्त नबुझेको केही पक्ष छ कि ?**

**उत्तर** : सामुहिक इहि गर्दा धरै कन्या हुने हुँदा माइकिङ्ग गरी पूजा विधिहरू भन्ने र गराउने गर्दछन् तर त्यो किन गराएको भन्ने कुरा स्पष्ट रूपमा व्याख्या गरेको देखिदैन । माइकिङ्ग हुँदा धेरै जस्तोले नबुझेर पनि सबै पूजा विधि र यसमा गरिने कर्म गराउँदा किन गराइएको भन्ने कारण पनि स्पष्ट रूपमा बुझाएर गराउँदा अझ राम्रो हुन्छ ।

**प्रश्न : इहिको विषयमा संचार माध्यमको भूमिका कस्तो छ ?**

**उत्तर** : आज भोली सामुहिक इहिको विषय वस्तुलाई संचार माध्यमले प्रकाशित एवं प्रस्तुत गर्दा झन राम्रो भएको छ । हाम्रो संस्कार संस्कृति महत्व बुझाउन यसले ठूलो भूमिका खेलेको छ ।

## परिशिष्ट ४

**नामः मुस्कान प्रधान, वर्षः ७, ठाउँ : बसन्तपुर**

**इहि कन्यासँगको अन्तवार्ता**

**प्रश्न : इहि गर्दा कस्तो लाग्यो ?**

उत्तर : राम्रो लाग्यो ।

**प्रश्न : कस्तो राम्रो ?**

उत्तर : राम्रो लुगा लगाउन पाएर ।

**प्रश्न : कुन लुगा राम्रो ?**

उत्तर : लेहेङ्गा ।

**प्रश्न : साडी राम्रो लाग्छ कि लाग्दैन ?**

उत्तर : लाग्छ ।

**प्रश्न इहि किन गरेको जस्तो लाग्छ ?**

उत्तर : थाहा छैन ।

**प्रश्न : इहि गर्दा के के गरेको सम्झना छ ?**

उत्तर : पुजा गरेको, वेललाई पूजा गरेको, सिन्दूर लगाएको सम्झना छ ।

**प्रश्न : वेल विवाह भनेको के हो, थाहा छ ?**

उत्तर : थाहा छैन ।

**प्रश्न : इहि गर्दा के के खाएको याद छ ?**

उत्तर : चिउरा, आलु, खै थाहा छैन ।

**प्रश्न : चकलेट पायौ कि पाएनौ ?**

उत्तर : पाएँ, धेरै ।

**केही नेवार शब्दका अर्थहरू**

आँगसा : टुप्पी

आगःछें : कुल देवताको घर ।

अजि : बज्यै

अलिद्यः : इहि देवता

इनायद्यः : गणेश देवता

इहिपटासी : इहिमा दिइने वस्त्र जसमा राता, पहेला धर्कोहरू हुन्छन् ।

कर्म खंकेगू : दश संस्कार अन्तर्गत गरिने संस्कार ।

कय्ता : गुप्ताङ्ग छोप्ने विशेष वस्त्र ।

कय्तापूजा : गुप्ताङ्ग छोप्ने विशेष बस्त्रको पूजा ।

चि : नुन ।

फूकी : मर्दा तेऱ्ह दिन बार्नुपर्ने आफन्त ।

बुसंखाये : जन्मदा भएको कपाल काट्ने ।

बाह्रा : रजस्वला भएकी वा नभएकी केटीलाई बाह्र दिनसम्म एउटै कोठामा नियममा राख्नु ।

वेल : बोधिचित्तको प्रतिक मानिन्छ ।

नेवा भाय् : नेवार जातीले बोल्ने भाषा ।

भुइसिन्ह : इहि, बाह्रा (गुफा), विवाहमा सिन्दूरारोहणमा विशेष नेवारहरूले प्रयोग गर्ने सिन्दुर ।

तास : सुन चाँदिको जरीले भरेको बहुमूल्य कपडा

सखि खिप : एक प्रकारको काचो डोरी

मिकुसिं : वेसार जस्तै पहेंलो, श्री खण्डको गुण भएको टुक्रे दाउरा ।

शतवेदिका : पहेंलो रङ्गको काँचो धागोको पाँच त्यान्द्रोको एउटा बनाइएको इहिपटासी : विशेष किसिमको तानमा बुनिएको कपडा जसलाई साडी लगाउँदा झैं लगाउन दिइन्छ । यसको रङ्ग रातो धर्को र थोरै पहेंलो मिश्रण हुन्छ । यसको रङ्ग रातो गरिनुमा यसलाई 'रजस्वला'को प्रतिक मानिन्छ ।

ह्वंकेगु : विवाहमा सिन्दूरारोहण सकिएपछि दुलहा र दुलहीको टाउको जुधाएर गरिने विधि ।

निंसिं : चोखो पार्ने कार्य ।

# सन्दर्भ ग्रन्थ सुची


**अंग्रेजी ग्रन्थ**

चट्टोपाध्याय, के.पि. (ई.सं. १९८०), हिस्ट्री अफ नेवार कलचर, एजुकेशनल इन्टरप्राइज प्रा.लि. काठमाडौं, नेपाल ।

नेपाली, गोपाल सिंह (ई.सं. १९६४), दि नेवारस, युनाइटेड एसिया पब्लिकेशनस, १२, रामपाट रो, वम्वे ।

पाण्डे, राजवली (ई.सं. १९६९), हिन्दु संस्काराज, मोतिलाल वनारसिदास पब्लिशर्स प्रा.लि. दिल्ली ।

गेरार्ड टोफीन (ई.सं. २००७), नेवार सोसाइटी, सोसल साइन्स बाहा, हिमाल बुक्स ।

बज्राचार्य, धनबज्र र मल्ल, कमल प्रकाश, (ई.सं. १९८५) "दि गोपालवंशावली", नेपाल रिसर्च सेन्टर पब्लिकेशन ९ ।

**नेपाली ग्रन्थ**

बज्राचार्य, गणेश (२०५८), नेवार संस्कार तथा पूजा विधिहरू, नेपाल भाषा मंका खलं, भोजपुर ।

**नेपालभाषा ग्रन्थ**

विष्ट, डोर बहादर (२०३०), सबै जातको फुलबारी साझा प्रकाशन, पुल्चोक ललितपुर ।

बज्राचार्य, रत्नकाजी (२०४६), नेवाः संस्कार संस्कृतिया ताःचा, बज्राचार्य प्रकाशन यें ।

जुजु, बलदेव (२०५२), नेवाः संस्कार व उफिया विधि, वैदिक प्रतिष्ठान, न्हायकंताला यें ।

मुनकर्मी, लीलाभक्त "नेवार समाजमा प्रचलित विवाह संस्कार" । गतिविधि साप्ताहिक । वि.सं. २०५७, मंसिर २४ पृ ६।

जोशि, हरिराम (२०५८), अभिनव संस्कृति कोष, जोशि रिसर्च इन्सिटिचयुट, टेकु, काठमाण्डौ ।

बज्राचार्य, पं. बद्रीरत्न (२०६१), दशकर्म संस्कार धर्म

श्रीमती माहिली बज्राचार्य, इतुंवहा यें ।

बज्राचार्य सिंधविल स्वस्थानी व्रत वाखं । यल, पाण्डुलिपि, ने.सं. ९८८

श्रेष्ठ स्वयम्भूलाल (१०८८), भिजि, च्वसापासा, काठमाण्डौ ।

उपासिका स्व. मोति लक्ष्मि (११०३) "धौवजि, निबन्ध मुना", नेपाल भाषा परिषद, यें ।

बज्राचार्य, गणेश (११२१) "नेवार संस्कार तथा पूजा विधिहरू", नेपाल भाषा मंका खल, भोजपुर ।

राजभण्डारी, रीता (११२२), नेवाः इहिपा विधि नेपाल मण्डल घ चाः धुकु, पाटन संयुक्त क्याम्पस

जोशि, हरि राम "चतु विवाह" (रोलम्वा ८ नं. १-२ जुन २०००, पृ.सं. २-५)।

स्वकवःगु इहि मुनेज्य, स्मारिका धर्मचक्र तःननी खल : (२०५४)

शाक्य, ऋतुपौ (सुखपत्र), राष्ट्रिय शाक्य समाज नेपाल (२०६३)

**शोधपत्र**

शाक्य, अनिल एम (२०००), नेवार म्यारिज एण्ड किनसीप इन काठमाडौं नेपाल, ए थेसिस समिटेड फर दि डिग्री अफ डक्टर अफ फिलोसोफी डिपार्टमेन्ट अफ हयूमन साइन्स, वर्निल, युनिर्भसिटी।

बज्राचार्य, बज्रमुनि (११२०) "नेवा संस्कार व उकिया शब्दावली छगू अध्ययन", मानविकी व सामाजिक अध्ययन संकाय, नेपाल भाषा केन्द्रीय विभाग, पाटन संयुक्त क्याम्पस यल ध्वखा, यल।

मानन्धर, श्रीमती राजदेवी "काठमाण्डौका एघार टोलका मानन्धर समुदायको सामाजिक सांस्कृति अवस्था एक अध्ययन" समाजशास्त्र/मानवशास्त्र केन्द्रीय विभाग त्रिभुवन विश्वविद्यालय २०५७।